# लेखक्रम

## सुरुमा...

मेरो पहिलो पहिचान भनेको म एक पाठक हुँ। आफुले देखेका, भोगेका, अनी सुनेका बात र बर्ताविहरु लेखुँ-लेखुँ लाग्यो। लेखेँ। ति धेरै बर्ष थन्किए। आज आएर धुलो टक्टक्याउँदैछु। धेरै लोभ गरेर आँफैमा सिमित गर्न मन मानेन। समय-समयमा 'लेख न हौ केटा' भनेर हौस्याउनेहरु सबैजनालाई धन्यवाद दिदैँ बाँकी बोल्ने जिम्मा कथाहरुलाई नै दिएँ।

# अल्ट्रा-साउण्ड

प्रिय छोरी / छोरा,

आज म बुवा बन्ने पक्का भएको दिन हो। म र तिम्रो ममी तिमीलाई भेट्न, छुन, समाउन अनी तिम्रा हर्कतहरुमा रमाउन साह्रै आतुर भइसक्यौँ। डक्टरले भने अनुसार तिमी ममिको गर्वमा बसेको करीब १४ हप्ता भएछ। हामीले भने आजबाट आश्वस्थ हुने गरी थाहा पायौँ। हामीले आज तिमिलाई भिडियो अल्ट्रा-साउण्डमा हेर्यौं। ममीको कोखमा कस्तो मज्जाले लुट्पुटिएर बसेको रहेछौ। खुसुक्क आएर लुसुक्क बसेको रहेछौ ममीको गर्वमा - कती चलाख ! तिम्रो ममीलाई अली-अली संका त लागेको रहेछ। आखिर आमा न हो - चाल नपाउने त चान्सै भएन नि ! भोक धेरै लाग्ने, थाके जस्तो हुने, तल्लो पेट कुटुक्क-कुटुक्क काट्ने, सास फेर्न अली गाह्रो हुने - स्वाँ-स्वाँ हुने, आदी लक्ष्यणको बारेमा भन्ने गर्थिन् मलाई। म लठ्ठुलाई के थाहा ! भिक्स दल्ने सल्लाह मात्र दिएँ। तिमी पनि कती बाठो है ? अहिले देखी नै ममीलाई जिस्काउन थालीसक्यौ।

डक्टरको भनाई अनुसार यो बेला ममी र तिमी दुवैमा आउँदै-देखिँदै गरेका सबै खाले परिवर्तनहरु 'नर्मल' छन्। आउँदा दिनहरुमा हामी अझ बढी सतर्क हुँदै, डक्टरको सल्लाह बमोजिम काम गर्दै जानेछौँ। ममीको खानामा ध्यान दिने जिम्मा मेरो हो। कसरी हुन्छ उस्लाई सजिलो पार्ने जिम्मा मेरो हो। आज *सामन* माछा बनाएर खुवाउने बिचारमा छु। तिमी पनि मिठो मानेर खानु है ! म धेरै पिरो-सिरो नहाली, थोरै तेलमा हल्का फ्राइ गरेर बनाउँछु नि, हुन्छ ?

ब्लाक एण्ड वाइट त्यो अल्ट्रा-साउण्ड भिडियोमा जब मैले पहिलो पटक तिम्रो आकृती देखेँ, अलिकती भक्कानिए, हर्षले आँखाका चेपहरु रसाए, के सोच्ने, के भन्ने - सपना-बिपना के हो के हो दुविधामा नै परेँ। तिम्रो ममीको आँखामा पनि त्यही भावुकता अनी त्यस्तै दुविधापन प्रष्ट देखिन्थ्यो। भिडियोमा तिम्रो ममी र मैले तिमी बनिदै गरेको देख्यौँ। तिमी त कती सानो, पिच्चे ! बच्चा बेलामा मैले खेल्ने गरेको डन्डी-बियोको बियो भन्दा पनि सानो। तर तिमी हुँदैछौ। तिमी हुर्कदैछौ। तिमी तिम्रो ममीभित्र बनीदैछौ। तिम्रा हात-गोडाले आकार लिदैछन्। तिम्रो शरीर चलायमान हुँदैछन्। अनी तिम्रा मस्तिस्कले निस्चित रुप लिदैछन्। हामीले तिम्रो पहिलो फोटो पनि लियौँ। तिम्रो ममीले फ्रेममा चिटिक्क पारेर

राख्ने रे त्यो अल्ट्र-साउण्ड फोटो। हामीलाई विश्वाश छ तिमीभित्र असल बिचार अनी सद्गुण पनि भरीदै छन् जुन हामीले भिडियोमा त देखेनौँ तर महसुस भने अवस्य गयौँ। फेरी त्यो हात-गोडा चलेको, तिम्रो कोमल मुटु ढुक्ढुक ढुक्ढुक धड्किएको हेर्दा त अली छुकछुके होलाउ जस्तो पो लाग्यो त हौ मलाई त! जे-जसो भए पनी प्रिय छोरी/छोरा, हामी तिम्रा कलीला पाइलाका डामहरु पछ्याउन उत्सुक छौँ किनकी...

आज म बुवा बन्ने पक्का भएको दिन हो!

*बुधवार, भाद्र १८, २०७६ (Wednesday - 04 September 2019)*

# हजुरबाको लभलेटर

प्यारी जुनकिरी खड्का,

पहिलो पल्ट तिम्रो गाँउमा दोहोरी कार्जेक्रममा तिमीलाई देखैँथे। त्यो रातो फरिया, धागो बाँधेको केश र त्यो नाकको नथियाले मेरो मन छोयो। तिमीले पनि मलाई हेरेको ख्याल गरेको थिएँ। कताकता काउकुतीझै लाग्यो। आजकल म गाई चराउन त्यै पाखामा जान्छु, तिमी कतै देखिन्छौ कि भन्ने आस लागिरन्छ। हुन त हाम्रा गाँउमा मनग्गे चरन छ, त्यती पर सम्म तिमीलाई नै हेर्न धाँउछु, सत्ते। हिजो सन्सरबार पनि गजुरेकोमा गा'को थिएँ। थुप्रै मान्छे जम्मा भा'थे रेडियो सुन्न। तिम्रा साथीहरु असर्फी, चमेली, मिठ्ठी, केसरी पनि आका'थे। यि आँखाले तिमीलाई चारैतिर खोजे, भेटेनन्, दिनै खल्लो भयो। जोर हप्ता भयो दर्शन नपाको, गाह्लो-साह्लो पऱ्यो कि ? मन भारी भयो, अनी थाम्नै नसकी यो चिठ्ठी बच्चु केसबलाई लेख्न लाएँ। उसैले पढेर सुनाउला तिमीलाई पनि। धन्दा नमान बच्चु मेरो मिल्ने साथी हो। तिम्रा घरमा पनि बिहे हुने गाँइगुइ सुन्दैछु। पल्लो घरकी चिनीचम्पाले उस्का साथीहरुसँग कुरा गरेको सुनेथैँ। यदी त्यसो हो भने, हामीले ढिला नगरौँ, भागौं।

असार लाग्यो, खहरे खोला उर्लिनु भन्दा पहिले नै हामी निस्कनु पर्छ। पोहोर साल कतीको घर खेत सखापै पार्यो, फेरी त्यही खोला नतरी डाँडा काटिदैन, बाटैमा पर्छ। तीन दिन, दुई रात हिंड्यो भने मधेस पुगिन्छ रे, गाइघाट। अब हामीले दिक्तेल छोड्नै पर्छ जुनकिरी। मैले सबै जोरजाम मिलाई सकेको छु, तिमीले धन्दा मान्नु पर्दैन। बनारसमा एउटा साथी छ, दया गर्तौला, जाने बेलामा 'लु केही पऱ्यो भने म छु, मजाले आए हुन्छ' भन्दै गाकोथ्यो। साह्रै राम्रो मान्छे छ, अप्सज लाउने ठाउँ छैन। भर्खरै मेट्रिक पास गरेर कर्मकाण्ड गरेर बस्छ रे। केही दिन उसैकामा बसौँला, पढेको मान्छे केही बाटो उस्ले पनि बताउला, सके मधेसतिर रोजगार लगाइदेला।

मधेस साह्रै फराकिलो छ रे, तेत्रा मान्छे अँटेका छन्, हामी कसो नअटाउँला त...फेरी मनग्गे, बारै मास खेती हुन्छ रे। हलो-कोदालो मैले जानेकै छ, बिउ चिनेकैछु, दाउरा काट्न, टाटी लाउन, परालको माच लाउन त म खप्पीसै छु। ज्याला मज्दुरी गरौंला, फेरी अधिँयामा पनि पाईन्छ रे जग्गा कमाउन। मेरो काकाको छोरो नि यस्तै काम गरेर ५ जनाको जहान छोराछोरी पालीरा'छ रे। बुहारीले नि काम गर्छिन रे एउटा खार्पाको पोख्रेलकाँ - त्यही लिप पोत, भात भान्सा, घाँस-दाउरा, उही आईमाईको काम। काम गरे बापत महिनाको ५ नगद पाउछिन रे अनी बेला मौकामा पोख्रेल्नीको साडी, लत्ता कपडा पनि। तिम्रो बारेमा पनि मैले यस्तै सोचेको छु। हामी दुईको ज्यान पालिन्छ तिमीले सुर्ता लिनु पर्दैन। त्यस्तै परे म नि बाहुनको छोरो हुँ, अली अली कार्जे गर्न जानेकै छु। मधेसमा पनि त श्राद्ध, पूजा, बिहे, ब्रतबन्ध, रुद्री, पास्नी, न्वारान हुँदो हो। बा सँग यि सबमा जाँदा-जाँदा मैले पनि रित पुर्याएर गर्न सिकीसकेको छु। मैले त अली पछी गाई पाल्ने पनि सोचीसकें। गाईको दुध बेचेर खर्च टार्न पनि हुने आफुलाई दही घिउ पनि हुने।

मेरो घरमा हामी चार भाई र दुइटी दिदी छौं। दिदीहरु बिहा गरेर गए पनि, आमा-बा, घर खेत हेर्न दाई-भाउजु र दुई भाई छदैँछन् घरमा। हुन त कती नै पो छ र हेर्नलाई नि। तिम्रा पनि २ भाई र एक बहिनी छे। सबै हुर्केकै छन्, जान्ने बुझ्ने उमेरका भइसकेका छन्। घरको राम्रो ख्याल राख्लान्। पछी हामीले पनि घरको लागि सक्दो गर्नुपर्छ, हाम्रो कर्तब्य पनि हो। हुन त मलाई यसरी भगाएर लान मन छैन तर अर्को बाटो पनि देख्दिन। झ्याँइ-झ्याँइ पञ्चेबाजा ठोकेर भित्राउने रहर अधुरै हुने भयो। बा-आमालाई कती सम्झाउन कोशीस गरें तर आफु भन्दा तल्लो जात, छेत्रीकी छोरीसँग हुँदै हुँदैन भनेर अड्डी लिएर बस्नु भा'छ। हुन त वहाँहरुलाई पनि यो समाज, छर छिमेकको डर छ नै। के गर्नु यस्तै छ चलन। आफुलाई जन्माउने हुर्काउने आमा बा सदा आदर्णीय हुन्छन्। उहाँहरुले आफ्नो छोराछोरी माथि हक जनाउनु भनेको, अधिकार पनि हो। सारा दुनियाँले धिकार्ला, छि: छि: धुर-धुर गर्ला तर आफ्नो सन्तानको सधैं भलो चिताउने आमा नै हुन्छिन्। संस्कृतमा एउटा स्लोक नै छ नि- “*मातृवत परदारेषु परद्रव्येषु लोष्टवत्। आत्मवत् सर्वभूतेषु यः पश्यति स पंडितः*” तसर्थ हामीले एउटा राम्रो, सक्षम, सबल परिवार बनाएर गरेर वहाँहरुको मन पगाल्न सक्नुपर्छ र वहाँहरुको सेवा गर्न सक्नु पर्छ जुनकिरी। मलाई विश्वाश छ तिमीले साथ अवस्य दिने छौ।

हो जुनकिरी मैले धेरै सोचेर यो कदम उठाउँदै छु, यो अचानकको निर्णय होइन। आज ५ गते भो, असार पन्ध्रको रात सबै थाकेर अबेर सम्म ओछ्यानमै हुन्छन्, हामीले १६ को मिर्मिरेमै डाँडा काट्नु पर्छ। गाईघाट पुगेर घरमा सबै खुलस्त पारेर चिट्ठी लेखुँला। मैले अली-अली दुध बेचेको पैसा जम्मा

पारेको छु, हामीलाई बनारससम्म जाने र केही दिन टुङ्गो नलागुन्जेल चलखेल गर्न पुग्छ। बरु तिमी पनि बिस्तार बिस्तार आफ्नो लाउने लत्ता कपडा पोको पार्न थाल। बाटोमा खानलाई २-३ माना चिउरा र गुन्द्रुक्को अचार पनि म हाल्नेछु, अनी मिल्छ भने तिम्रो बारीको २-४ वटा काँक्रो हाल्नु, साह्रै रसिला छन ति काँक्रा। काकाको छोरोले नेपाल खाल्टोबाट ल्याइदिएको पुस्टकारी गोजीको गोजिनै छ। त्यो पनि बाँडेर खाँउला बाटोमा। म तिमीलाई त्यहीँ चौतारीमा कुरेर बस्नेछु। भाले बास्नु भन्दा अगाडिनै निस्कनु तिमीले। केही परसम्म बच्चु पनि आउँछु भन्दैछ। पर्दैन भनेको अड्डी लिएर बसेको छ। म तिम्रो प्रतिक्षामा हुनेछु।

तिमीलाई माया गर्ने,

प्रेम प्रशाद मिश्र

# बोक्सीको बाण

बिनय - बालख छदाँ मलाई बोक्सी लाग्यो भनेर भट्टराई बाजेको मा 'फुक्न' लगियो। हाम्रो घरमा पालेको गौरी गाईले भर्खरै बाच्छी पाएकीथी। बाच्छीले जन्मेको ४ दिनमै सिल्टिमोर खाएकीथी। गौरीले त्यो दिन निक्कै रोइ-कराइ गरेको मलाई सम्झना छ। 'बोक्सीले खाइ..,' ओल्लाघर-पल्लाघरकाले गाँइगुँइ गरेको मैले सुनेको थिएँ।

यता मलाई जिउ लल्याक्लुलुक हुने, एकछिनमै थाके जस्तो हुने, खाना नरुच्ने, बान्ता, ज्वरो, छेर्पाटे चलीराथ्यो। अरुबेला आमाको आँखा छली-छली, चोरी-चोरी खाने हर्लिक्स पनि खल्लो लाग्न थाल्यो। बुवाले डाक्टरकोमा पनि पुऱ्याउनु भएको थियो। डाक्टरले 'टन्न पानी, झोल, साग सब्जी, र यो चक्की बिहान्, दिउसो र राती केही खाएर ख्वाउनु' भनेर आमालाई चक्की थमाइदेको थियो। आमाले चक्की पानीमा घोलेर ल्याइदिने गर्नुभयो। 'कस्तो तितो'.... जहिले नाक्ठीक गर्ने म। २-३ दिन औषधी खाएँ। तर आमाको मन न हो झट्ट भट्टराई बाजेकोमा पु-र्याइ हाल्नुभयो।

गाँउका सारा मान्छे अलीकती टाउको दुख्यो कि पुगीहाल्थे बाजेकाँ। कसैको पिनास बिनास गर्नु पर्ने हुन्थ्यो, कोही डङ्किनी ले उपद्रो गरी भन्दै पुग्थे, कोहीलाई खाको पचेन रे, कसैको तल्लो पेट कटक्क काट्ने, भित्री आन्द्रो बाटरिने, जन्डिस, अदाहा आदी आदी। कुल बिग्रिने, देउता रिसाउने त सामान्य थिए। पहिला पनि एकपटक मलाई जङ्गली लाग्यो भनेर दौडाएका थिए, निन्द्रामा थर थर काँपी रा'थेँ रे।

भट्टराई बाजेले सर्सर्ती मलाई हेरे, अनी नाडी छामे, आँखा च्यातेर हेरे, निधार छामे, हातहरु ओल्टाइ पल्टाइ गरे अनी एकछिन घोरिए। दाई र दिदी पनि सँगै आएका थिए। सबैजना चुप्चाप, मौन। सबैका कान ठाडा, आँखामा अनेकन प्रश्न, डर, त्रास, भय मिसिएको म देख्थेँ। मलाई पनि 'कहिले यो बुढोले मुख फोर्ला' झैँ लागिरा'थ्यो। आमाले त्यो सुन्यता भङ्ग गर्दै - "के रै'छ त बाजे ?" सोध्नुभयो।

" यो तपाईंको कान्छो छोरो हैन ?," बाजे बोले। "कती दिन भयो यस्तो भा ? "

" आज १० दिन जती भयो होला, एक दिन अगाडि सम्म हट्टकट्ट थियो, टन्न बिगौती खाएर सुतेको केटो, भोलीपल्ट उठ्दा साह्रै " आमले भन्नुभयो।

" बोक्सी लागेको हो बाजे ? " दिदी प्याच्च बोली।

" मलाई था' छ कुन बोक्सी लागेको, त्यो रोड पारीकी..." दाईले थप्यो। दाईलाई बिचमै रोकेर आमाले "चुप लाग तिमेरु, बाजेलाई हेर्न देओ," भन्नुभयो। त्यसपछी दाईले दिदीको कानमा खुसुखुसु के भन्यो कुन्नी दिदी छक्क परेर मुख आँsss गर्दै जिब्रो टोकी।

" कान्छाको आँत ज्यादै कम्जोर रै'छ। आँत कम्जोर भा'कालाई छिट्टै बोक्सी चड्छ, " बाजेले भने। " म काँ ल्याउन एक दिन पनि ढिला गर्नु भा'को भए... "

आमाले अनुहार मलिन बनाउदैँ भन्नुभयो - " लौ न बाजे के गर्नु पर्छ, गर्नुस्, त्यस राच्छेस्नीका आँखा लागे। यो बालखले के बिगारेको थियो र त्यस डंकिनीको ? मर्न नसकेकी असती .... ।" आमाको आँखामा रिस स्पष्ट देखिन्थ्यो। आमले त्यसरी गाली गरेको पहिलोपल्ट सुन्दैथें। मलाई कता कता डर लाग्यो, म त मर्न पो लागैँ कि क्या हो जस्तो लाग्यो। आमाको आँखाको डिलमा आँसु ढलपल गरेको देखेर त झन पक्का भयो। अनाहकै मेरो मुखबाट फुत्कियो - " आमा म मर्छु हो अब ?"... आमा भक्कानिनु भयो। साडिको फेद तानेर आँखा ओभानो पार्दै भन्नु भयो - " हैन बा, त्यसो भन्नु हुँदैन, तिमीलाई केही हुँदैन, बाजेले अब ठीक पारी हाल्नुहुन्छ नि।" अनी उँहा घरी मेरो हात मुसार्ने त घरी कपाल सुम्सुम्याउन लाग्नु भयो। सधैं 'तँ' भनेको सुनेको आमाले 'तिमी' भनेर सम्बोधन गरेको सुन्दा अनौठो र खुशी पनी लाग्यो। दाईदिदिको अनुहार पनि खिस्रिक्क थियो, अनुहार रुन्चे पारे दुवैले।

" धन्दा मान्नु पर्दैन कान्छा, म फुकफाक गरेर बोक्सी उतारि दिन्छु " बाजेले भने। " बरु धुप चामल के ल्याउनु भा छ ?" आमातिर हेर्दै सोधे। आमाले दुई सिन्का अगर्बति सल्काउनु भयो, चामलको पोको खोलेर बाजेको अगाडि राखीदिनु भयो। एक दर्जन जती केरा, ५-७ सुन्तला, नास्पाती र २० का तिन नयाँ नोट पनि बाजेको अगाडि राखिदिनु भयो। " *ॐ डन्ठकाल घामसरी मत्सेनगरी, धर्ती फोरी गए काला, धर्ती फोरी आए काला, ज्ञान सुमेरण, ॐ नमः ठ ठ रिङ्ग रिङ्ग फट स्वहा,*" बाजे फुक्न थाले। गुन् गुन् गुन् गुन् के के भन्दै आँखा चिम्लेर मेरो निधार आफ्ना चोर औंलो र बुडी औंलो ले अठ्याँए अनी बिस्तारै चलाईरहे। धुप मेरो टाउको देखी खुट्टा सम्म पुर्याए, ८-१० पटक। बिच बिचमा लामो सास तानेर 'फु' 'फु' गर्दै म तिर फुक्थे। बेला बेलामा ४-५ गेडी चामल मेरा अनुहारतिर फ्याँक्थैं। यो श्रीङ्खला केहीबेर चली रह्यो। म फुकिदैँ थिए। आमा केही शान्त हुनु भएको थियो। दिदीदाई टुलुटुलु

घरी बाजेलाई, घरी आमालाई र घरी मलाई हेर्थे। बाजेले धुपको खरानी मेरो निधारमा लगाए अनी पाँच औंलाले चामल टिपेर आफ्नो देब्रे हत्केलामा राखेर हेर्न थाले, जोखाना।

"घर वरीपरी कै रे'छ," बाजेले लामो सास तानेर भने। दाईले दिदिलाई कोट्याँउदै बिस्तारै साउती गऱ्यो - "देखिस् मैले भनेको कस्तो लाग्यो?," आमाका आँखा ठुला भए, कसैले चिसो पानीले छ्यापे जस्तो उँहा झस्किनु भयो। बाजे भन्दै थिए -"तिम्रो घरको बाच्छी पनि त्यसैको बाणले मरेको हो, मान्छेलाई ताकेकी रे'छ तर पशुलाई लाग्यो। मैले मेरो मन्त्रले कसेको छु, पर्सी फेरी आउनु फुक्न।" एउटा कपडाको गूड्या जस्तो आमालाई दिँदै फेरी भने - "ल यो लगेर घरको धुरीमा राख्नु, मैले जपेर दिदैछु, भुत पिसाच टाढा भाग्छन्।" आमाले कपडाको गूड्या झोलामा हाल्नुभयो अनी म तिर हेर्दै भन्नुभयो - "हेर, अघी भन्दा अहिले अनुहार कती उज्यालो, रुपरङ्ग नै फेरिए जस्तो।" अहिले उँहा निकै खुशी देखिनुभयो। अनी फेरी बाजेतिर हेर्दै भन्नुभयो - "त्यस राडीलाई बकाउन मिल्दैन बाजे ?, सबै बकाएर, नाङ्गेझार पार्न पर्ने... अरुले गरी खा'को देखी नसक्ने कस्ती लबस्तरी, आफ्नो लोग्ने त टोकी टोकी, अर्काको घर किन भाड्न पऱ्यो ? भड्उइ।" अली मसिनो स्वरमा आमा भन्दैहुनुन्थ्यो - "आफ्नी छोरीलाई पनि बोक्सी बिद्या सिकाउँदै छौडां बनाउँदै छे रे ... अस्ती राती गस्ती गर्दै जाँदा खुद हाम्रो प्रहरी रिजाल भाई छैनन् ?... हो उसैले देखेको रे ... कलधारा छेउको ठुलो बरको रुखमुनी दुइटी नाङ्गी आईमाई के के पूजा पाठ गर्दैथे रे निलो बत्ती बाली। बिचरा एक्लै थिए रे डरले परैबाट भागेछन् ति भाई... टिक्न खान नदिने भै कसैलाई गाँउमा तेस कप्टीले, यसरी कती दिन सहेर बस्ने, तपाईं आँफै भन्नोस त ? म, आफुलाई पनि सन्चो नभा जस्तो भै'रा छ २-४ दिन देखी...सपना पनि के के डर लाग्दा देख्छु, अँठन हुन्छ घरी घरी। यसरी सांढे भएर हिंड्न दियो भने त भोली हाम्रा लोग्ने छोराछोरीको के दसा पार्ली ? सम्झिदा नि आङ् सिरिङ्ग हुन्छ मेरो त।"

भट्टराई बाजे पनि निकै गम्भिर देखिदैथे। आमाको कुरा निकै ध्यान दिएर सुन्दैथे। बेला बेलामा सहमतीको मुन्टो हल्लिन्थ्यो बाजेको। म भने जम्मै कुरा सुन्दैथिएँ तर बुझ्दै थीइन।

"तँपाइले भनेका कुरा मनासीव छन्, मैले धेरैलाई फुकी सकें, प्राय म'काँ आउने सबै तँपाइले जस्तै रिस, आक्रोस पोख्छन्," आमाको कुरा सुनी सकेर बाजेले भने। "सारा गाँउलाई था'छ, यो गाँउको बिष को हो भनेर। समस्या काँ ने'र छ भने, तँपाइ हामीले 'लौ प्रहरीको जिम्मा लाईदिउँ न त' भन्न पनि के भनेर उजुरी गर्ने – 'बोक्सीलाई थुनी पाँउ' भन्न भएन, आजसम्म कहीं नभाको कुरो। उल्टै उजुरी गर्देली र परीएला फसादमा। मैले सोचेको त बरु केही उपाय निकालेर तेस्को सेखी झार्ने अनी रातारात गाँउ निकाला गर्न पाए ढुक्कै हुन्थ्यो। टन्टै साफ। अरु दुई-चार जनालाई पनि खबर गरौं

अनी पर्सी तपाईं छोरालाई लिएर एता आँउदा पोख्रेल्नी, तिम्सिनी, रिजालनी, कोइराल्नी, खतिओड्नी.. सबैलाई साथै लिएर आउनोस। म ध्रुबे, शक्ती र शम्भुलाई पनि डाक्छु अनी छिनोफानो गरौँला, हुन्?"

आमाले "हुन्छ ल तेसै गरौं," भन्नुभयो। आमा र बाजेले अरु धेरैबेर यस्तै कुराहरु गर्नुभयो। म त त्यहीं भुसुक्कै निदाएछु। पछी जानेबेलामा आमाले "बाबु ल हिँड घर जाँउ, ढिला भो," भनेर उठाउनु भयो। दाईदिदी अघी न कतीखेर हिँडी सकेछन्। म उठ्दा भट्टराईनी बजै पनि थीइन्। जाने बेलामा उनले भनिन् - "ल अली चाँडै आउनोस है बैनी पर्सी।" आमाले "हुन्छ बजै" भन्नुभयो।

घर पुग्दा बुवा आइसक्नु भाथ्यो अफिसबाट, रेडियो नेपालमा घटना र बिचार सुन्दै हुनुन्थ्यो। हामीलाई देख्नासाथ - "आखिर भट्टराई बाजेकोमा पुर्याइ छाड्यौ है ?" भन्नु भयो। आमाले "अँ पुर्याए नि, फुकाएर ल्याएकी" भन्दै भान्सा तिर लाग्नुभयो।

"अहिले कस्तो छ त बाबु ?, खै आइज त," म बुवाको नजिक गएँ। उँहाले मेरो टाउको छाम्नु भयो अनी अफिसको झोला खोतल्दै भन्नुभयो - "ल मैले जीवनजल ल्याछु, आज राती एस्को झोल टन्न खाएर सुत्ने, बुझिस् ?" मैले 'हुन्छ' को टाउको हल्लाँए। भोलीपल्ट दिँउसो पनि बुवाले आँफै जीवनजल बनाउनु भयो....जती नमिठो लागे पनि बुवाको डरले चुपचाप पिएँ। साँझमा अनार, मेवा र केरा खाँए। पर्सीपल्ट बिहान दुधमा हर्लिक्स हालेर आमाले दिनुभयो। साह्रै मिठो लाग्यो। भात पनि टन्न रुच्यो, कहिले नथप्ने म, थपी थपी खाएँ। बुवा आमा खुशी हुनु भयो। भात खाएर हात चुठ्तै गर्दा आमाले बुवालाई भन्दै हुनुन्थ्यो - "अब आज फेरी भट्टराई बाजेले बोलाका छन, दिँउसोतिर पर्नुपर्ला....फुक्न।"

"अब बिसेक भईसक्यो, पर्दैन... वाइहातको खर्च...औषधी खाँदैछ नि...की सकियो ?" बुवाले भनेको सुनेँ।

"बाँकी छ अझै एक पत्ती... मनको शान्ती नै... अस्ति फुक्दा फुक्दै कस्तो चङ्गा देखिएको थियो, तपाईंले जे भने नि ति बुढा जान्ने चै जान्ने छन है... त्यत्रो ओखती गरेका गिरीकी श्रीमतीको अल्सर त तिनैले ठीक पारे...बिचराहरु काँ मात्रा धाएनन...कल्कत्ता, काठमाडौं, भेलोर।" आमाले भन्नुभयो।

"लौ तिमीले नै जानेकीछौ अनेकखन्न, मलाई अफिस जान ढिला भयो, म उठें, तिमी पनि खाना खाउ।"

त्यो दिन म फेरी पहिले कै जस्तोगरी फुकिएँ। स्कुल सकेर दाईदिदी पनि भट्टराई बाजेकोमा आए। आमाले "भाईलाई लिएर तिमेरु घर जाओ म अलीबेर मा आँउछु," भन्नुभयो। हामी रिक्सा चढेर फर्कियौँ।

दाई म भन्दा ६ बर्ष जेठो र दिदी ४ बर्ष जेठी छे। दाई एस. एल. सि. दिने तयारीमा थियो शायद। घर फर्किदैं गर्दा दाइले मलाई जिस्काउँदै - "अब तँ पनि बोक्सो होस्, बोक्सी लागेको मान्छे बोक्सो हो," भन्दै अनेक आवाजमा "ही ही ही हु हु हा हा" रावण हाँसो हाँस्न थाल्यो।

"हैन भाई हैन...जे पायो त्यही नभन्नु त...तपाइँ नै बोक्सा...," दिदी अली कड्केर बोली।

"हजुरबुवाले भनेको बोक्सीहरु त मान्छेको घरमा राती, जम्मै मस्त सुती सकेपछी पस्छन् रे, अनी खुन चुस्छन् रे...खुन चुसेको दाग नै बस्छ रे जिउमा" दाईले भन्यो। मलाई झन डरलाग्यो। कतै मेरो जिउमा पनि त्यस्तो दाग त छैन? कतै मेरो खुन त चुसिएन? आज राती बोक्सी आएर खुन चुस्दा चुस्दै म ब्युँझे भने? दिदीले म डराएको चाल पाइछ क्यार, म तिर हेर्दै भनी - "तेस्ता बोक्सीलाई त झाँक्रीले ठीक पारी हाल्छन् नि, फेरी भट्टराई बाजे झाँक्री पनि त हुन्, केही हुँदैन अब।" मलाई हल्का सान्त्वना भयो।

******

म ओछ्यानमै थिएँ। आमाले चिया टेबलमा राखेर "उठ् अब, कती सुत्छस्, आजबाट स्कुल जानुपर्छ," भनेर मेरा पाखुरा घचैंट्नु भयो र बाहिर निस्किनु भयो।

"सञ्चै हुनुन्छ भाउजु?," कसैको आवाज मेरो कानमा ठोक्कियो।

"ठिकै छु, बिनोद बाबुको के छ? आज बिहान बिहानै कता? टाढै?" आमा बोलेको सुनियो।

"अँ आज त्याँ स्कुलमा मिटिङ् छ...अनी दाई खै त?"

"बिहानै हेडसरको फोन आकोथ्यो...त्यै मिटिङ् मा जानुभयो होला, म पूजा कोठामा लागेँ, भेटै भएन, स्कुलतिरै भेट्नुहुन्छ होला बाबुले"

"ए लौ त भाउजु म लाग्छु, सबै जम्मा भैसके होलान्।"

"अनी बाबु के पऱ्यो त्यस्तो, के को मिटिङ हो एती सबेरै?"

"ल भाउजुलाई था छैन ?"

" खै था छैन त बा "

" त्यो रोड पारीकी बिधुवा छैन, के नाम हो...गंगा क्या... अस्ती राती जे भाका गुण्डाहरुले मराणासन्न हुनेगरी भकुरेछन्...आची खुवाउने, तातो पन्युँले डाम्ने, जे ले भेटो उहीले हानेछन्...हात खुट्टा भाच्ने गरी...छोरीलाई पनि जथाभावी गरेछन् । आमा छोरी दुबै हस्पिटलमा छन् रे...आमाको त बाच्ने आसै मारिसके रे डाक्टरहरुले...छोरी पनि बौलाई लस्तो मान्छे देख्यो कि मनपरी छाडा गाली गर्छे रे... चिथोर्ने, झम्टिने गर्छे रे...मेरी श्रीमती कामगर्ने हस्पिटलमा नै भर्ना गर्यरि'छ...छोरी त बौलाईसकी...पागलखाना पठाउने कुरो छ भन्दैथिन् ।," बिनोद काकाले सबै बित्रान्त एकै सासमा सुनाए । "ल भाउजु म अब चैं लागे, बाँकी कुरो भरे दाइले ल्याउनु होला ।" आमाले केही बोलेको सुनिएन ।

यो सब सुनी सक्दा मेरो निद्रा पुरै खुली सकेको थियो । जुरुक्क उठें । फिनिनी टाउको घुमे जस्तो भयो, आँखा अगाडि पुरै अन्धकार...च्वास्स मुटु घोचे जस्तोपनी भयो । भट्टराई बाजे, पोख्रेल्नी, तिम्सिनी, रिजालनी, कोइराल्नी, खतिओड्नी, ध्रुबे, शक्ती र आमाको अनुहार आँखा अगाडि झल्याक्झुलुक आए... बिलाए...आए... बिलाए । गर्मीले चिट् चिट् पसिना छुट्न थाल्यो... हतार हतार झ्याल खोलें । कान तातेजस्तो भयो । आफ्नै मनलाई प्रश्न सोध्न पनि डरलाग्यो । किनभने त्यो प्रश्नको उत्तर दिनु पर्ने हुन्थ्यो र मलाई उत्तर थाहा हुँदाहुँदै पनी मेरो सुन्ने क्षमता थिएन, म सुन्न चाहन्न थैँ । तुरुक्क आँसु झर्यो । मेरा आँखाहरु रोडपारी गएर अडिए...निकैबेर । यतिकैमा एउटा लाम्खुट्टे उडेर मेरो पाखुरामा टेक्यो...आफ्नो सुइरो रोप्यो...खुन चुस्यो...उड्यो...एकछिन पछी लामखुट्टेले टोकेको ठाउँ रातो भएर आयो, खुन जमे जस्तो । मैले यो सब हेरिरहें । स्कुल पनि मन नलागी नलागी गएँ । त्यो दिनको पहिलो घण्टी क्लासमा सरले अन्धबिश्वास बारेमा पढाउनु भयो ।

# भ्यालेन्टाइन्स् डे...

## १.

" अनी के छ त भ्यालेन्टाइन्स् डे को प्लान केसु ? "

" प्लान ? नो प्लान !," मैले खाटभरी असरल्ल छरिएका कागजपत्र, पुर्जी, बिल् आदी समेट्दै भनेँ ।

" उस् उस् ! तपाईंको प्लान नहुने ! लु पत्याएँ !," आस्माले पत्याइनन् ।

"छैन त के भन्ने ?," मैले भनेँ । मेरो ध्यान एउटा पुर्जीमा थियो ।

" उस् उस्," आस्माले फेरी पत्याइनन् ।

"हो भन्या, सत्ते," मैले ऊतिर फर्केर किल्किले समाउँदै प्रमाण जुटाउन खोजेँ ।

" उस् उस् उस् "

"छ प्लान ल, दरो प्लान छ । खुशी ?," म हल्का जङ्गिगएँ ।

"के प्लान छ, हामी पनि सुनम न त," लेग्रो तानेर सोध्छे आस्मा ।

" डेटिङ् जाने प्लान छ नि एउटी च्वाँक मैयासँग," मैले आँखा सन्काउदै भनेँ ।

" उस् उस् उस् "

"छैन भन्दा नि तिम्रो उस् उस् .... छ भन्दा नि उस् उस् ? अरु केही भन्न आउँदैन ?," म चर्किएँ । उस्को सेतो अनुहार पहिला कालो भयो अनी निलो भयो । आस्मा उठेर हिँडिन् । मैले वास्ता गरिन। एकछिन पछी आस्मा चिया लिएर भित्र पसिन् ।

यो उस्को पहिले देखीको बानी हो । मसँग रिसाई भने ऊ चिया बनाउँथी, दुवैलाई । भन्थी - " रिसाएर केही हुँदैन, यो गुलियो चिया खाएर दुवैको मनको तितोपन पखाल्नु पर्छ ।," मेरो रिस चियाको प्रतेक चुस्कीसँगै क्रमस धमिलिँदै जान्थ्यो अनी मन मिठिदै । उस्को अनुहारमा पनि मिठास छाँउथ्यो, मिठो चिया जस्तै । हुन त म नै उस्तो हुँ । आमाले त उहिलेदेखी नै भन्नुहुन्थ्यो ' नाकका टुप्पामा छन तेरा रिस ।' फेरी एकैछिनमा आस्मासँगको रिस आफुतिर सर्छ। आफु फोकटमा रिसाएकोमा आँफैसँग रिस

उठ्छ अनी बिस्तारै सेलाउँदै जान्छ - आस्माको चिया जस्तै ।

उस्लाई फकाउन म प्राय पुराना कलेजका दिनहरु कोट्याउने गर्छु अनी आँफै पनि टोलाउन थाल्छु । ऊ ध्यानमग्न भएर सुनिराख्छे । लाग्छ ऊ स्वस्थानीको अगस्थ मुनी हो र म महादेव र सतीदेवीको प्रेमगाथा बाचन गर्दैछु स्कन्द कुमारजी भएर । ऊ नै मेरो पहिलो माया हो । पहिले माया हार्ने आँट कसको हुन्छ र ? त्यो जमानामा उस्को मन जित्न के पो गरिएन । बाटो लामै परे पनी उस्को घरको बाटो पारेर हटिया धाइयो । उस्को घर अगाडी पुग्नासाथ आफसेआफ हिरो साइकलको रफ्तार पनि कम हुन्थ्यो अनी बज्थ्यो "किर्लिङ् किर्लिङ्" घन्टी । कलेजका बाटा फेरिए । दौंतरीका - 'क्या दोस्त ! लड्की मिल गै, दोस्त भुल गै'- गुनासा खेपिए । अनेक तान बुनियो । म माया जित्ने दौडमा थिएँ, जितेँ । त्यो बेला अहिलेको जस्तो फेसबुक, ट्वीटर, स्काइप केही थिएन । अहिलेको जस्तो इन्टर्नेटमा प्रेम कम, बिज्ञापन बढी देखिने ढर्‍रा फोटाहरु राखिन्नथे । फोटो राख्नै परे'नी पर्सको कुनोतिर राख्थे - मैले जस्तो ! जे होस् गर्व लाग्छ - अरुका जस्तै मेरी बुढी आजसम्म रिसाएर माईत गएकी छैन । वास्तबमै ऊ पानी हो, मैले जस्तोसुकै आकार लिए पनि ऊ त्यतै प्रकार लिन सक्छे । हुन त उस्ले मुखै फोरेर त भनेकी थीईन तर आस्माका नजानिदा इसाराहरुले मलाई हौस्याएका थिए उबेला। सधैं 'केसब' भन्नेले एकदिन 'केसु' भनिन् पहिलोपल्ट । उनले लजाएर स्विकारीन। म पास भएँ । त्यो दिन भ्यालेन्टाइन्स् डे थियो ।

आस्माको स्विकारोक्ती सँगै हाम्रो दैनिकी बद्लियो । अनी मायाका नियमित भेट, कलेजका हिँडाई, छड्के हेराई, मायालु घुर्क्याइँ, लबस्तरो हाँसो.... वाह ! प्रसङ्गै प्रसङ्गमा कुरो चल्दा, म जिन्दगी लामो छ भन्थेँ । ऊ छोटो छ भन्थी । म जिन्दगीमा अरुलाई खुशी दिनसक्नु पर्छ भन्थेँ । ऊ आफु खुशी हुनुपर्छ भन्थी । म अरुको लागि बाँच्नु पर्छ भन्थेँ । ऊ जिन्दगी आफ्नो लागि बाँच्ने हो भन्थी । म जिन्दगी गहिरो छ भन्थेँ । ऊ ‘छ र ?’, प्रतिप्रश्न गर्थी । ‘अनी भाग्य नि ?’, म कुरो बढाउथेँ । ‘आफ्नो भाग्य आँफैँ लेख्ने हो’, ऊ भन्थी । ‘जीवन अकल्पनिय छ भन्छन् नि ?,’

‘जीवन नै सिङ्गो कल्पना होइन र ?,’ ऊ भन्थी ।

म जिन्दगी समयको हातमा छ भन्थेँ । ऊ ‘समय कसैको हातमा छैन,’ भन्थी।

म - ‘मेरो जिन्दगी त तिम्रो हातमा छ,’ भन्थेँ ।

‘ ल हेर मेरो हात चैँ तिम्रो हातमा छ मेरो राजा,’ ऊ आफ्नो हात मेरो हातमा राख्थी र लाडिन्थी।

खैर जे होस्, जिन्दगी प्रतीको मेरो धारणा आस्मामाथी लाद्न म सक्दिनथेँ । न त ऊ आफ्ना बिचार म

माथि थोपर्न नै चाहन्थी। मैले अर्थ्याउने गरेको लामो जिन्दगी र उस्ले अर्थ्याएकी छोटो जिन्दगी जोडेर एउटा ठीक्क-ठिकै जिन्दगी जिउने दाउमा हामी थियौँ। हामी जीवनको लम्बाई भन्दा नि चौडाई फैलाउन चाहन्थ्यौँ। केही समय पछी परीवार र परम्परासँग जुधेर आस्मा मसँग आईन्। उन्का परिवारलाई - मेरो जात उन्को जत्रो भएन रे! आज सम्म, ५ बर्ष भो - हाम्रो माया बिसको उन्नाइस भा'छैन। सानोतिनो भनाभन् त कस्कामा पो हुँदैन र? एकै ठाउँ राखेका थाल-बटुका कहिले काहीँ ठोक्किन्छन्, आवाज निस्कन्छ अनी छिन मै शान्त हुन्छन्!

"रिसाउनु हुन्न भने एउटा कुरा सोधुँ?," पलङ्को एक कुनामा टुसुक्क बस्दै आस्माले सोधिन्।

"भनन, किन रिसाउने... मलाई तिमीले आफुलाई लागेको कुरा भन्ने अनी मैले तिमीलाई भन्ने, त्यही हैन लोग्ने-श्वासनी भन्या?," म रोमान्टिक हुन खोजेँ। आस्मा मुस्कुराइन्। हुन त म लठ्ठु नै छु- माया देखाउने/जताउने मामलामा। मुटु भित्र औंधी लाग्छ तर लोलोपोतो, भन्छन्नी चिल्लो घस्न, फुलबुट्टा भर्न जान्दिन। साथीहरु सायरी, गजल, कबिता के के जाती लेख्छन्। आफ्नी प्रियालाई जुन तारासँग तुलना गर्छन्। तर अहँ मैले त्यो सब कहिल्यै जानिन। खैर जे होस्, आस्माले मलाई चिनेकी छीन्। मेरो माया बुझेकी छिन्। जुन, तारा त टाढाका कुरा भए- मैले त उस्लाई नजिकै, मुटुमै राखेकोछु नि। जुन तारासँग दाँजेर किन टाढा पार्नु?

"छ नि, हामी दिल्ली नजाम ल?," गह भरी आँसु राखेर आस्माले भक्कानिदै आग्रह गरिन्। छताछुल्ल आँसुहरु मनपरी उस्का गालामा पोखिन पो थाले। ऊ अली वर सरेर मेरो छातीमा आएर अढेस लागि। मेरो छातीमा खसेका उस्का आँसुले मलाई बिझायो। पोल्यो। मेरो पनि आँखा रसाए तर लुकाउने प्रयत्न गरेँ - लामो सास ताने। मेरो गला अवरुद्द भयो। यस्तो बेला त मैले उस्लाई सम्झाउनु पर्ने, नरोउ भन्नु पर्ने, भरोसा दिनु पर्ने... तर अघी नै भनीहालेँ नि म लठ्ठु छु - जान्दिन देखाउन। आफ्नो हातले उस्को कपाल सुम्सुम्याए, ऊ घुँक्क-घुँक्क गर्दैथी मेरो छातीमा। बिस्तारै उस्को टाउको उठाएँ, कपाल छरिपस्ट थिए - सम्हालिदिँए। छेउको रुमाल तानेर उस्का आँसु पुछीदिँए। ऊ एकटक मलाई हेरिरही। दुई थोपा आँसु फेरी खसे उस्को गालामा। तीनलाई पनि मैले मिल्काइ दिएँ। उस्का गालामा आँसुका दागहरु देखिनथाले। उस्ले पनि मेरो आँखा पुछीदी। मैले आस्माको चिँउडो हल्का उचालेर भनेँ - "ह्यापी भ्यालेन्टाइन्स् डे!"

उस्ले आँखा चिम्ली अनी मेरो छातीमा हल्का मुक्का हान्दै भनि - "तपाइँलाई नि!"

२.

आस्मालाई मनाउन यसपाली भने अल्ली बढी नै कसरत गर्नुपर्‍यो। मैले धेरै तर्क राखेँ तर जम्मै फोस्रा भै'दिए। ऊ भन्थी - " भो पर्दैन अब यो किमो सिमो म केही गर्दिन। दिल्ली जा-आईज, खर्चको भार। मलाई अब बाँकी जीवन आनन्दले बाँच्न दिनोस्, बिन्ती ! जती समय छ त्यो म तपाईंसँग बिताउन चाहन्छु। हस्पिटलमा हैन। मेरो खप्परमा तपाईंलाई दु:खदिन लेख्यारे'छ, मलाई माफ गरिदिनोस्...," ऊ भक्कानिएर बोल्न सकिन। सलले आँसु पुछिन्। म उस्लाई एकनासले हेरिरहेँ। काँक्राका चिराजस्ती रस भरिएकी मेरी आस्मा, आज दुब्लाएर हाड र छालामात्र बाँकी थियो उस्को शरीरमा। किमोथेरापी अनी रेडिएसन ट्रिट्मेन्टले होला उस्को सलसल परेको कपाल, पातलिँदै जादैथे। हातगोडा तोरीको डाँठजस्ता कम्जोर देखिन थालेका थिए। लुगाका बिचमा राखेको कपुर दानाजस्तो उनी प्रतीदिन बिलाउँदै जादैँथी।

ऊ भन्दैथी -" पक्कै पनि उ जन्ममा मैले केही पुण्य गरेको हुनुपर्छ, तपाईंजस्तो लोग्ने पाएँ। तपाईंले त छोराछोरीको नाम पनि जुराइ सक्नुभा'थ्यो। छोरी भई भने 'अदिती', छोरा भए 'अनुराग'। याद छ ? म कत्ती छोराको जिद गर्थे अनी तपाईं छोरीको रट लाउनु हुन्थ्यो। हामी कती हाँस्थ्यौ, कती खुशी थियौँ। खै कुन दैव लागेर मैले तपाईंलाई सन्तानखुस दिन सकिन। मेरो बाँजोपनमा पनि सहस्र साथ दिनुभयो। मेरो चित्त दुख्ला भनेर आफुभित्रै आफ्ना दु:ख दबाउनु भयो। आफ्नो पिडाको एक झन्कोसम्म पनि मेरो नजिक आउनदिनु भएन। म त तपाईंसँग भागेर आ'की। अरु आफ्ना भन्नेहरु मेरो गर्भ खस्दा हेर्नसम्म पनि आएनन्। बरु उल्टै 'ठीक्क पर्‍यो' र 'खुच्चिङ' को व्यबहार देखाए। तपाईंले केवल मेरो वास्ता गर्नुभयो, दुनियाँको बाई सत्ताइस कुरोमा कुनै चाख दिनुभएन.....।," अरु पनि के के भन्न खोज्दैथिन् तर उनको गला अवरुद्ध भयो र बोल्न सकिनन्।

ऊ अनेक तर्क निकालेर मलाई महान बनाउन खोज्दैथी तर मलाई महान बन्नु थिएन। म त्यो बेला पनि उस्को श्रीमान थिएँ, यो बेला पनि श्रीमान हुँ अनी आउने अनेकौँ साल पनि उसैको श्रीमान बन्नु छ। लाटी भन्नु कि बाठी- मलाई सन्तान दिन सकिन भनेर आफुलाई कोस्छे, आफ्नो भाग्यलाई सराप्छे ! मलाई दिने भनेको सन्तान उस्को पनि त हुन्थ्यो नि। अनी उस्लाई झन कती पिडा भयो होला ? रोएको बच्चा फकाउँदै काखमा राखेर आँत सेक्के घाममा टाउकोमा तोरीको तेल लगाइदिने उस्को इच्छा धमिलिँदा कस्तो भयो होला ? के उस्को पनि इच्छा थिएन होला र 'थिगीरी नानी थिगिरी' भन्दै बालखका कलीला पाईलाका डाम पछ्याउने ? ति सब इच्छामा चिसो स्याँठ चल्दा कस्तो भयो होला मेरी आस्मालाई ?

भिर जोत्नुभन्दा नि कठिन भयो आस्मालाई दिल्लीको लागि मनाउन। मैले 'हुन्छ' भन्न सकिन। उस्को प्रस्ताव 'मर्ने तयारी' गर्छु भन्ने तिर थियो। त्यो मलाई कदापी स्विकार्य थिएन। उस्को प्रस्ताव र मेरो ढिटमा जीवन र मृत्यु अडिएको थियो। मैले मानिन, मान्दै मानिन। अन्त्यमा मेरो ढिटले जित्यो। हामी दिल्ली जाने भयौँ, यो एकपल्टको लागि भनेर मैले उस्लाई मनाएँ।

दिल्ली पुग्यौँ। दिल्ली त नामको मात्र दिल्ली रहेछ। दिल भा'का थोरै मात्र भेटिन्थे। बसको खलाँसी देखी नामुद हस्पिटलको नामी डाक्टरसम्म - जम्मैको ध्यान सिर्फ एक चिजमा, पैसा! तर मलाई जे खप्नु परे नि खप्ने आँट थियो, आस्माको लागि। ऊ झनझन सिथिल देखिन थाली। हामीले लागेका एक्स्रे, औषधीका पुर्जी केही काम लागेन। फेरी जम्मै सुरुबाट जाँच भयो। डाक्टरले एक दिन मलाई सुटुक्क बोलाएर भनेँ -" ज्यादा से ज्यादा छे महिने हे आपके पत्नीके पास।," मेरो खुट्टा मुनीको जमिन धसियो।

हामी नेपाल फर्कियौँ। नेपाल फर्केको दिन देखी आस्माको स्वाथ्य झनै उँधो लाग्दै गयो। आफुलाई प्यारो लाग्ने चिज पाउन मान्छेले अनेक गर्छ। मैले पनि गरेँ। डाक्टरी दवाईका साथसाथ झारफुक पनि गराएँ। 'गुगल' गरेँ - केही भेटिन्छ कि भन्ने आसमा तर उस्को क्यान्सर दुवै म्रिगौला हुँदै शरीरभरी फैली सकेको हुँदा, मैले कुनै उत्तर पाइन। साथीभाइको सल्लाह अनुरुप अब मैले आस्मालाई घर मै राख्ने निधोमा पुगेँ। आस्मा पनि खुशी भइन्। महिनादिन जस्तो पछी उस्को कम्मर मुन्तिरको भाग चल्न छाड्यो। बिस्तारै हात। बोल्न पनि निक्कै सकस हुन थाल्यो। ऊ टुलुटुलु मलाई हेर्थी, मेरो लाचारीपनलाई। एकदिन बल गरेर मेरो कानमा बिस्तारै भनि - " मेरो आत्माले शान्ती पाओस् भन्ने चाहनु हुन्छ भने, बिन्ती घरजम गर्नोस् है! लोग्नेभन्दा पहिला जान पाएँ, मलाई दुखेसो छैन!"

भोलीपल्ट बिहानै एक्कासी ढप्क्याएका झ्याल ह्वाँङ्ग खुले। एक मुस्ट तातो हावा बाहिर निस्के। आस्मामा अब सास रहेन.... मात्र उस्को सुवास थियो... बिलाएका कपुरका अवसेस।

.......

सान्त्वना र सहानुभुती दिनेहरुका ओहीरो लाग्यो। लोग्ने-श्वासनी रथका दुई पाङ्ग्रा भन्छन्। म एक पैयामा झरेँ - स्थिर! हामीले रचेको सुन्दर संसारमा जरा त गाड्यौँ तर उम्रिन पाएनौँ, हाँगाबिगाँ हुँदै फैलिन नपाउँदै अल्पायुमा मेरी आस्माले सधाको लागि आँखा चिम्लीसकेकी थीईन्। म सोच्थेँ - क्यान्सर, हस्पिटल, डाक्टरको ओहोर-दोहोर, आफन्तका जिज्ञासा, बिरामीको ब्यथा आदी कुराहरु त

अरुलाई मात्र हुन्छ, अझ आस्माले हेर्ने गरेका हिन्दी धारावाहिकमा मात्र हुन्छ। तर मैले आस्मासँग बसेर हेरेका अनेकन 'मेलो ड्रामा' का सिनहरु म आँफै भोग्दैथैं। आस गर्छु कसैले 'कट' भन्नेछ अनी आस्मा फेरी बिउँझने छिन्। तर ऊ बगेको खोला भईन्, फर्किनन्। साथीभाईहरुले सम्झाउँदै गर्दा मेरो शरीरको कोस कोस टनटन हुन्थ्यो। म बाट मेरो मुटु चुडिएको थियो। अन्तिम दिनहरुमा आस्मा ले भनेकी थीईन् -" धेरै चिन्ता नलिनु, प्रेसर बड्छ।"

आज उनी भईदिएकी भए भन्ने थिएँ -" मेरो मुटु कसैले चुडेर लगी सक्यो आस्मा। मुटु नै नभए के को प्रेसर ?"

## ३.

आस्माले मलाई छाडेर अर्कै लोकमा गइन्। आज दुई बर्ष भयो। ऊ गएको अली दिन पछी सान्त्वना र सहानुभुती दिनेहरुको भिड पातलिँदै गयो। लग्भग जिरो मै पुग्यो। आस्माको चिताको आगो त सेलाइ सकेको थियो तर मेरो मनमा लागेको डँढेलो - दन्कि रह्यो। रातबेरात यत्तीकै टोलाउँथे, शहरका गल्ली-गल्लीमा। काममा फिट्टो मन हुँदैनथ्यो। घर गयो - सिङ्गै घर खर्लप्प उल्टिएर मलाई निल्न आँउथ्यो। आस्मा थीईन्, घर उज्यालो थियो। घरजाने बाहना थियो। चाहना हुन्थ्यो। कसैले ढोकामा आँखा ओछ्याएर मेरो बाटो कुरिराहुन्थ्यो। कहिलेकाहीँ ढिला हुँदा 'किन ढिला ?' प्रश्न सोध्थ्यो। 'आज छिट्टै आउनोस् है, फिलिम जानुपर्छ ' मायालु आग्रह गर्थियो। चुरा बज्थ्यो। पाउजु छन्किन्थ्यो। खानामा स्वाद हुन्थ्यो। रिस हुन्थ्यो। रस हुन्थ्यो।

मेरो जीवनमा उनको आगमन सँगै म बद्लिएको मात्र थिईन, म मा बल पनि थपिएको थियो। मेरो मनको भाव - सुख, दु:ख आदी बुझ्ने एक अनौठो लिट्मस मैले गुमाए। मेरो हृदय लाग्छ सुकिसकेको खहरो बन्यो। त्यो खहरोलाई रक्सीले धेरै भिजाएँ। धुँवामा धेरै उडाएँ। कतीले 'देबदास' भने, कतीले 'पागल'। अझै पनि मेरा लुगाहरुमा, सिरक-डस्ना, सिरानेहरुमा उस्का आभाहरु म महसुस गर्छु। कतीपल्ट त अस्माका काला लामा केसहरु मेरा शरीरमा टाँसिएको भेटेकोछु, भेट्छु। आस्माले साडीमा लाउने गरेको हुप्सियो, मेरो सर्टका खुस्किएका टाँकहरु, फुटेका चुराका अवसेशहरु, ड्रेसिङ टेबलमा लडिरहेको थाक्रो, नङ्गपालिसका खाली बट्टा.... सुन्नेहरु हाँस्दा हुन, तर यि यावत स-साना चिजहरुले मलाई चिमोटि रहन्छन्। घोच्छन्। अनी पुन: आस्मा बल्झिन्छिन्। त्यस्तो बेला आस्मा भा'को लोक जाने कोशीस नगेको हैन ! आस्मा सपनामा आएर अनेक सम्झाउथिन्। बाँच्नको लागि हौस्याउथिन्। एउटै

कुरो दोहोर्याउछिन् - 'घरजम गर्नोस !' म रिसाउँदै ब्युझन्थे ।.......मलाई आस्माको रिस पखाल्ने चियाले ठुङ्थ्यो !

" हेर भाई, अब यसरी जीवन चल्दैन ! बिचार गरे," दिदीले धेरै सम्झाउँथी । "भगवान शिवले त दोस्रो विवाह गरे !"

"म भगवान हैन !," म झर्किन्थे । म एकान्तमै रम्न थालीसकेको थिएँ । कसैको सल्लाह, सुझाब वाइहात लाग्थे । "तपाईंका कुरामा मेरो कुनै रुची छैन ! मेरो सुर्य अस्ताई सक्यो, कहिल्यै नउदाउने गरी । यस्तो वाहियात कुरा नगरेकै जाती !"

यसरी सम्झाउने हरुमा मेरी दिदी मात्र लागेकी थिइन, मेरा साथी-भाईहरुले पनि अनेक प्रस्ताब ल्याएका थिए । उनिहरु भन्थे -"कती बिदुर भएर बाँच्छस् ? तेरो अगाडि एउटा लामो जीवन पर्खिरहेको छ ।"

कती त फोटो बोकेरै पनि आए । मैले वास्ता गरिन । भनीहालेँ नि मेरो हृदय सुकीसकेको थियो । उनीहरु मरभुमीमा मलजल गर्ने प्रयास गर्दैथिए ।

दुईचार दिन दिदी चुप लाग्थि अनी फेरी कोट्याउन थाल्थि - "हेर बाबु, हामी तेरो भलो नै चाहन्छौ । बुहारीले मलाई मर्ने बेलामा यही एउटा इच्छा रहेको बताएकीथि । उस्को इच्छा पुरा गर्नु तेरो कर्तब्य हो ।"

एकदिन आमाले पनि यस्तै-यस्तै कुरा गर्न थाल्नु भयो । आमाको सपनामा आएर बुहारीले मेरो घर-गृहस्थीको लागि रोई-कराई बिन्ती गरिन् रे ! अनी आमा दौडेर सिफारिस गर्न आइपुग्नु भयो । मैले उँहालाई सम्झाउदै भनेँ - " हेर्नोस् आमा, मैले दिदिलाई अनी मेरा साथी-भाईहरुलाई जे भन्ने गरेकोछु तपाईंलाई नि त्यही भन्ने छु । मलाई कठोर भइस् भन्नुहोला तर मैले यस बिषयमा केही सोचेको छैन । म मेरो एक्लोपनमै रत्तिन थालिसकेँ । ल मैले 'हुन्छ' भने रे, तपाईं आँफै सोच्नोस त मसँग बिहे गरेर आउनेको के दसा होला ? म आस्मालाई बिर्सिएर अरु कसैलाई माया दिन सकुँला र ? मैले त आँसु निलेर जिउन सिकीसकेँ तर के उस्को आँसुले उस्लाई जिउन देला र ? के म असल लोग्ने बन्न सकुँला र ? एउटा अर्को जिन्दगीको बलिदान दिन म कसरी तत्पर हुनसक्छु ? आस्माको आफ्नै स्थान छ मेरो जीवनमा । जम्मैजना अस्मालाई बिर्सी भन्छन् तर म बिर्सिन चाहन्न - उस्को 'साटो' अरु ल्याएर ! त्यसैले यो फोटो, प्रस्ताब लिएर नआउनोस् । यदी गर्नै परे म आँफै भनुलाँ । मेरोलागी अब कसैले झन्झट नलिनुहोला ।"

आमाले मेरो कुरा एकाग्र भएर सुन्नुभयो तर उँहाको अनुहारले प्रस्ट बताउदै थियो कि उँहा सहमत हुनुहुन्न भनेर। आमालाई पनि के दोष दिनु ? आफ्ना छोराछोरी खुशी हुन्, घरजम गरेर टुङ्गोमा पुगुन् भन्ने चाह होला नै ! आमाबाले खाने भनेको छोराछोरीको खुशी न हो।

" कैले सम्म यत्तिकै बस्छस् त ?, " आमा अली रुखो हुनुभयो। तर वहाँको रुखोपन पछाडिको माया मैले प्रस्ट देख्नसक्थैं। वास्तवमै आँखाले कहिल्यै झुट बोल्दैनन् ! भिजेका आँखाका चेपहरु सारीको सेप्कोले थप्थपाउँदै बिस्तारै भन्दैहुनुन्थ्यो - "हेर बाबु, तँ मेरो एक्लो छोरा होस्। तेरा बा बितु भयो। मेरो पनि एउटा खुट्टा घाटमा छन एउटा घरमा। कैले दैवले उठाउने हुन् पत्तो छैन। मर्नु अघी तेरो राम्रो भएको हेर्ने मेरो इच्छा पुरा गरिदेउ मेरो बाबु।"

" के नचाहिदो कुरा गर्नुहुन्छ ? मर्ने कुरा नगर्नोस् मेरो अगाडि !," म झन्किन्छु। " के मेरो इच्छा चै इच्छै हैन ? मैले चै आफुले लागेको गर्न नपाउने ?"

"रिस हेरन रिस," आमाले भन्नुभयो। "नाकका टुप्पामा छन्।"

"अनी के त ?" मैले भने। " कोही भेटैँ भने आँफै भनुलाँ, अब धेरै किचकिच नगरनोस्," मैले प्रसँग टाल्न खोजैँ।

" मैले त बोल्यो कि तलाई किचकिच हुन्छ है ?," आमाले बाउठिदै भन्नुभयो। " छोराछोरी साना छँदा मर्लान भन्ने पिर, ठुला भए मार्लान भन्ने पिर।"

त्यो दिन आमा चुप लाग्नु भएन। थुप्रै उदाहरणहरु थिए उँहासँग, पुन: विवाह गरेर बसेकाहरुको। एक एक गर्दै जम्मै सुनाउनुभयो। टेलिभिजनमा आउने हरीवंस आचार्य देखी हाम्रो गाउँको रिक्सावाला हरिबोल चौधरी सम्मका कुरा सुनाउन भ्याउनुभयो। वहाँले सुनाए मध्येका प्राय मैले दिदीको अनी अरु साथीहरुको मुखबाट सुनीसकेको थिएँ। जानेबेलामा भन्नुभयो - " एकपल्ट धैर्य गरेर बिचारेस् बाबु मेरा कुरा। आफुलाई हेर - गतीगरास हराई सक्यो ! कोठाभरी डुङ्डुङ्ती रक्सी चुरोटको टर्‍रो गन्ध फैलिएको छ। छोरीमान्छे न'भा घर, घर हुँदैन - नपत्याए आफ्नै वरीपरी हेर ! अरु केही नगरे पनि यसो बाहिर निस्की, घुम्न जा, साथी-भाईसँग घुलमिल गर, हावा खा ! कती दिन यसरी जोगीताल गरेर बस्छस्?"

## ४.

आमाले भनेजस्तै मेरो 'जोगीताल' नै भएको थियो क्यार ! आमा जानुभए पछी ऐना अगाडि उभिएर निकैबेर आफुलाई निहाले - को को नचिनेको मान्छेलाई मैले हेरेजस्तो लाग्यो । लाग्छ मेरो अगाडि एउटा कङ्काल उभीरहेछ - लुगा लगाएको कङ्काल ! याद छैन अन्तिम पटक कैले दार्हीजुँगा खोरेथैँ । आँखा ओरिपरी काला दागले घेरा हालेका थिए । आँखा स्वयम चै भित्र कता गाडीएका थिए, मेरा कङ्काल आँखा ! टाउकोमा जिङ्रिङ्ग कपाल - तिनमा काँइयो नजोतिएको जुग बितीसेकेको थियो । लुगा दस ठाँउ उध्रिएको, मैलो। हातगोडाका नङ्ग कुनै बड्दैथे, कुनै आँफै भाचीदैथे । नसाहरुमा रगत संचार नपुगेर घाममा सुकेका गडेउला जस्ता देखिन्थे । भोल्टेज कम जिरो वाट बत्तीजस्तै थियो मेरो अनुहारको तेज - मधुरो पहेलौँ ।

मलाई दिन, महिना, गतेको कुनै हेक्का थिएन । कतीपल्ट त म शनिबार, चाडपर्वका बिदाका दिनमा पनि अफिस पुग्थैँ । बैँकमा झुण्डिएको भोटे ताल्चा देखेर घर फर्कन्थे । खल्तीबाट फोन निकालेर हेँरे - Saturday, December 15, 2012. डिसेम्बर २१ मा प्रलय हुन्छ रे !- हल्ला उड्दै गरेको मैले सुनेको थिएँ । 'पृथ्वी ध्वस्त हुन्छ', 'जम्मै मान्छे मर्छन्,' जस्ता बातहरु बतासिएका थिए देशभरी । मैले सौँचे 'अब ६ दिन।' मन हलुङ्गो भयो । बाहिर बार्दलीमा निस्कैँ - केटाकेटीहरु गल्लीमा दौडीरा'थे, चोरपुलीस खेल्दैथे क्यार ! 'एssss त्रिसुलिको कान्छी बदाम, माम्फुली, माम्फुली' गर्दै एउटा ठिटो मेरो घरको बाटो आयो । केटाकेटी उस्का वरीपरी झुम्मिए । मैले माथिबाट बोलाएँ - "ए भाई, एक मानो मलाई हाल्दै गर त, म तल आएँ ।," न्यानो पारीलो घाम लागेकाथिए त्यसदिन। केही दिन पछी २१ डिसेम्बर आयो, गयो। २२ को बिहान घाम उदायो । मन खिन्न भयो मेरो ।

क्रिस्मस मुखैमा थियो । हरेक बर्ष बैँकमा, अफिसका कर्मचारीहरु मिलेर पार्टी प्यालेसमा 'क्रिस्मस इभ डिनर' को आयोजना गर्थे । आ-आफ्ना परिवार, छोरा-छोरी जम्मै लिएर रमाईलो गर्थे। मैले जान छाडीसकेको थिएँ । यो पाली मेरो अफिस डेस्कमै आएर जम्मैले आग्रह गरे । मैले पैलेपैले जस्तो रेडिमेड उत्तर दिएँ - "मिल्यो भने आउँछु।" उनीहरुले मानेनन् । निकै ढिप्पी गरे। मेरो घरमा आएर उठाएर भा'नी ल्याउने धम्की नि आयो । मैले 'हुन्छ, हुन्छ' भन्नै पर्‍यो । सोचैँ - एकछिन मुख देखाउन मात्र भा'नी गईदिन्छु । भोलीपल्ट साँझ दिदी घर आई, मेरो हालखबर बुझ्न । कैलेकाहीँ आएर म न'भा बेलामा मेरो कोठा मिलाइ दिने, लुगामा स्त्री गर्दिने, बराड-कुँराड, थान्कोमुन्को आदी गर्न थालेकीथी । मैले पर्दैन भन्थे तर माने पो ! सामान्य कुराकानी भए। मैले उस्लाई 'क्रिस्मस डिनर' जाने कुरो बताएँ । निक्कै खुशी भई । मैले बुझिन, डिनर खान जाने म खुशी थिई ऊ । अर्को दिन घर फर्किदा ढोकामा हजाम

उभ्भीरा'थ्यो। मलाई देखेर भन्यो -"तपाईंको आमाले पठाइलिनु भा'को, बाल कट्वाउन!"

...

डिनर पार्टीमा पुग्दा, कामका प्राय सबै पुगीसकेका थिए। प्राय सबैजना मलाई देखेर छक्क पर्थे। "अरे केसबजी, तपाईं?" भन्थे। धेरै जसोले मेरो नयाँ हुलिया मनपरेको बताए। "चिटिक्क" देखिएकोछु भन्थे! वेटरहरु वाइन, भुटन आदी बोकेर एताउता दौडिरा'थे। केटाकेटीहरु कोही रुँदैथे, कोही दैडिराथे, कोही खाँदैथे - प्राय दौडिराथे। म वाइनको गिलास लिएर एउटा कुनामा बसीरहेँ। चुरोट सल्काउन लागेको थिएँ एउटा सानो प्लास्टिकको बल मेरो खुट्टामा आएर ठोकियो। एउटी फुच्ची दौडेर आई।

"अंकल बल," उस्ले मेरो कुर्सी मुनीको बल देखाउँदै भनी। मलाई केटाकेटी दौडेको खासै मन परिराको थिएन। मैले कुर्सी मुनीको बल ताने र भनेँ - " अब देखी एता नखेल्ने भए मात्र दिन्छु, हुन्छ?," उस्ले मेरो हातबाट बल लिदै भनी - "हुन्छ अंकल।" बल लिएर अल्ली उता पुगेपछी पछाडि फर्केर भनी - "अंकल, चुरोट खायो भने क्यान्सर हुन्छ!"

मन चियो भयो। मैले केही भन्न नपाउँदै ऊ दौडी। चुरोट गोजीमा हालेँ। एकछिन पछी फेरी बल मेरो कुर्सी मुनी आयो। फेरी त्यो फुच्ची आई र भनी - "अंकल बल"

मैले बल हातमा लिँदै भने -"अघी मैले के भनेको थिएँ? अब यो बल म नै राख्छु।"

"सरी अंकल, यो लास्ट। अब एता खेल्दिन," घोसे मुन्टो लाएर उस्ले भने। मलाई नरमाईलो लाग्यो।

"ठिक छ," मैले अली नरम हुँदै भनेँ। "तिमिलाई कस्ले सिकायो चुरोट खायो भने क्यान्सर हुन्छ भनेर? पैला त्यो भन अनी यो बल दिन्छु," मैले जिस्क्याएँ।

"ड्याडीले," उस्ले भनी। "ए हैन, हैन ममीले "

"ड्याडीले कि ममीले?," मैले नबुझेर सोधेँ।

"ड्याडिले ममीलाई भन्नु भयो रे, अनी ममीले मलाई," उस्ले मतिर हेर्दै भनी।

"अनी खोई त तिम्रो ड्याडी ममी?," मैले जान्न खोजेँ।

उस्ले आकाशतिर देखाउँदै भनी - "ड्याडी त ऊ त्याँ तारामा हुनुन्छ रे। पर भन्दा पनि धेरै पर।" उस्ले एताउता मान्छेको भिडतिर हेर्दै फेरी के भन्न लागेकीथी, "छोरी, अब घर जानुपर्छ हिडँ, " भन्दै एकजना

महिला हामीतिर आइन्। ति महिला अली नजिक आएपछी फुच्चीले भनी - "मेरो ममी"

"सर नमस्कार !," ति महिलाले हात जोडीन्। "खाना भो सरको ?"

म वाल्ल परैँ। चिनिन। अहँ चिन्दै चिनिन।

"म पार्वती," उस्ले मेरो अनुहार पढि क्यार। " एक बर्ष भो बैँकमा। एकाउन्टिङ हेर्छु। सरको अफिस माथ्लो तल्लामा छ, म तल्लो तल्लामा छु। चिन्नु भएन होला।," उस्ले मलाई असहज नहुनेगरी बताई। फुच्चीले मेरो हातको बल अघी नै निकालेर दौडी सकिछ। मैले चाल पाइन।

"ए सरी," मलाई अफ्टेरो भो। "म केसब," मैले उस्को अघी नै को नमस्कार फर्काउदै भनैँ।

"सर कोटेश्वरमा 'नेपाल यातायात' चढ्नु हुन्छ होला हैन ?," उस्ले सोधी। मैले हो भन्न नपाउदै उस्ले भनी -" म तिन्कुनेमा चढ्छु। तपाईंलाई देखीरा'हुन्छु अफिस आउने टाएममा।"

म फिस्स हाँसे। फुच्ची दौडेर आई र उस्की ममीलाई च्याप्प समाती।

"हस् त सर म अब लागैँ, अबेर भो," उस्ले फेरी नमस्कार गर्दै भनी। "अंकललाई 'बाइ' भन नानु," छोरीको कपाल हल्का मुसार्दै उस्ले भनी।

"बाइ बाइ अंकल," उस्ले कलीला हात हलाउँदै भनी।

मैले पनि हात हल्लाउँदै भनैँ - "बाइ बाइ"

## ५.

क्रिस्मस पार्टीबाट निस्किएँ। निक्कै राती भैसकेको थियो। तैपनी हिँड्दै जाने बिचार गरेर लखर-लखर घरको बाटो हिंड्न थालैँ। मलाई कुनै हतारो थिएन घर पुग्नुको। दिनभरीको कोकोहोलो, चहलपहल, भागदौडलाई बिर्सिएर काठमाडौंका ब्यस्त गल्लीहरु उँघ्न-उँघ्न लागेका थिए। फाट्टफुट्ट सडकपेटीमा थापिएका चिया पसलहरुमा ड्राइभर, खलासीहरु झुम्मीएका देखिन्थे। कोही घुर बालेर आगो तापिरा' थिए। गोजीबाट चुरोट निकालैँ। 'अंकल, चुरोट खायो भने क्यान्सर हुन्छ,' फुच्चीले भनेको याद आयो। आस्माको याद आयो। बिहे पछी मेरो चुरोट पिउनु निक्कै कम भा'थ्यो। कैलेकाहीँ आस्माले देखि भने मेरो सात्तो लिन्थिन्। ठीक त्यसैगरी 'क्यान्सर हुन्छ अनी ठीक्क पर्छ,' भन्थिन्। मैले अझै बुझ्नसकेको छैन,

मलाई हुनुपर्ने क्यान्सर उस्लाई किन भयो ? मैले पाउनुपर्ने सजाय, उस्ले किन पाई ? हुन त मेरो लागी यो भन्दा ठुलो सजाय के हुन्थ्यो होला र ? ऊ अब थीइन ! तै फुच्चीकि ड्याडी जस्तै मेरी आस्मा पनि 'पर भन्दा पनि निक्कै पर,' गईसकेकी थिइन्।

...

भोलीपल्ट बसमा फुच्चीकी आमा, पार्वतीलाई देखैँ । उस्ले पार्टीमा भनेजस्तै तीनकुनेबाट ऊ बस चढि। मलाई देखेर हाँस्दै नमस्कार गरी । मैले उस्को नमस्कार फर्काएँ । म बसको अन्तिम-अन्तिम तिरको सिटमा थिएँ । ऊ ढोकानेर उभीरा'थी । बस बानेस्सोरमा रोकियो । मान्छेको हुल छिचोल्दै बसबाट ओर्लिन मलाई अली समय लाग्यो । तल ओर्लीदा पार्वती कुरिरा'रैछे । उस्ले मलाई देखेर फेरी नमस्कार गरी । मैले पनि फर्काएँ ।

"सन्चै सर ?," उस्ले सोधी।

"ठिकै छु," मैले भनैँ । "तपाईंलाई कस्तो छ नि ?"

"आराम छ," उस्ले भनी । अनी म अघी अघी हिंडे, ऊ मेरो अल्ली पछी पछी । अफिस पुगेर म सरासर माथ्लो तल्लामा गएँ । अर्को दिन पनि पार्वतीलाई देखैँ । उस्ले नमस्कार गरी, मैले फर्काएँ । बसबाट ओर्लेर 'सञ्चै सर ?,' सोधी । मैले 'ठिकै छु,' भनैँ । अनी मैले 'तपाईंलाई कस्तो छ नि?' सोधैँ । उस्ले 'आराम छ' भनी । म अघी अघी हिंडे, ऊ मेरो अल्ली पछी पछी । अफिस पुगेर म सरासर माथ्लो तल्लामा गएँ । अर्को दिन त्यसतै । फेरी त्यस्तै । हरेक दिन म 'सञ्चै' हुन्थे, ऊ 'आराम' हुन्थी। म अघी अघी हिँड्थे, ऊ मेरो अल्ली पछी पछी । अनी अफिस पुगेर म सरासर माथ्लो तल्लामा जान्थे ।

एकदिन उपत्यका बन्द भयो । सरकारले खाना पकाउने LPG ग्याँसको मुल्य बढाएको बिरोधमा विद्यार्थी संगठनहरुले आन्दोलन गरे । आपतकालिन र अत्यावस्यक बाहेक कुनै सवारी-साधन चल्न दिएनन् । कोटेश्वर देखी बानेस्वर पैला निकै हिँढी सकेको थिएँ, २५-३० मिनेटको बाटो, मलाई बन्दले खासै छोएन । प्राय कोटेश्वरको भित्रीबाटो बाट तिन्कुने हुँदै शान्ती नगरतिर लम्किन्थैँ अनी त बानेश्वर आइहाल्यो । बन्दको दिन म आठै बजे जस्तो निस्किएँ १० बजेको कामका लागि । घर बसेर पनि के नै गर्नु थियो र ! बाटोमा एउटा किराना पसलमा चुरोट किन्दै थिएँ, 'अंकल' कसैले बोलायो । त्यो आवाज मैले पैला सुनी सकेको आवाज थियो । पछाडि फर्केर हेरैँ । एउटा घरको बार्दलीमा त्यही बल माग्ने फुच्चीलाई देखैँ, पार्वतीकी छोरी । हतार-हतार चुरोट गोजीमा हालैँ र ऊ भएतिर हाँस्दै हात हल्लाएँ ।

छेउमै उभिएकी पार्वतीले नमस्कार गरीन्। मैले नमस्कार फर्काएँ।

"सन्चै सर?," उस्ले सोधी।

"ठिकै छु," मैले भनेँ। "तपाईंलाई कस्तो छ नि ?"

"आराम छ," उस्ले भनी। "अफिस त जान लाग्नु भा हैन होला एती चाँडै ?"

"अफिसै हो," मैले भनेँ। "आज छिट्टै निस्केको, गाडीहरु ठप्प छन्।"

"तै त आज बन्द गेरेछन्," उस्ले भनी। अनी छोरीतिर हेर्दै भनी -"इ एस्को पनि स्कुल बन्द रे आज। एक्लै हुन्छे घरमा। मैले त बिदा लिएँ सर आज कामबाट।"

"ठिकै गर्नुभयो," मैले भने।

"सरलाई हतार छैन भने एक कप चिया खाएर जानुभए नि भो नि," पार्वतीले भनिन्। "म एक्कै छिनमा बनाई हाल्छु।"

म के भन्ने, के बाहना बनाउने भनेर सोच्दै थिँए, उस्की छोरी तल आएर मेरो हात समाउँदै - "जाम अंकल" भनेर मलाई तान्न थाली। म फुच्चीलाई पछ्याउँदै माथि कोठामा पुगेँ।

"तपाईं बस्दै गर्नोस् म चिया ले'र आई हाँले," भन्दै पार्वती भन्सातिर लागिन्। सायद म बैठक कोठामा थिएँ होला - कोठा चिटिक्क देखिन्थ्यो। एताउता आँखा डुँलाए - कोठामा भएका टिभी, दराज, सोफा, टेबल, कुर्सी जम्मै ब्यबस्तित थिए। भित्तामा एउटा फोटो झुण्डीरा'थ्यो, माला लाएको फोटो। 'पक्कै पनि उस्को लोग्नेको होला,' मैले अड्कल काँटे। फुच्ची दौडेर आई र मेरो छेउमा बसी।

"मेरो त आज छुट्टी, मकै भुट्टी," उस्ले कम्मर हल्लाउँदै भनी। "अंकलको स्कुल छुट्टी छैन ?"

मलाई हाँस उठ्यो। मैले "छैन त मेरो स्कुलमा त आज पनि पढाई हुन्छ," मैले भनेँ।

"तिमी कती क्लास पुग्यौ ?," मैले सोधेँ।

"म यु के जि," उस्ले गर्वसाथ भनी। "अनी अंकल कती क्लासमा पढीसिन्छ ?"

"म त एल.के जि," मैले हाँस्दै भनेँ।

"उस् उस् उस्," उस्ले मुख बङ्ग्याउदै भनी। म झसँग हुन्छु! ठीक त्यसैगरी आस्माले मेरो कुरा पत्याइनन् भने भन्थिन् 'उस् उस् उस्।' म बोलिन।

"अनी अंकल ठुलो भएर के बन्ने ?" उस्ले सोधी।

"म?" एकछिन सोचेँ - म अझै ठुलो हुन बाँकी छ त ? अनी उस्लाई जिस्क्याँउदै भने - "म त फिलिमको हिरो बन्ने।"

अघी जस्तै मुख बङ्ग्याउदै उस्ले भनी - "उस् उस् उस्," म फेरी झस्किन्छु। ऊ भन्दै हुन्छे - "हजुर त हिरोको ड्याडी बन्न मात्र सुहाउँछ होला," ऊ हाँस्न थाल्छे। फेरी एक्कासी के सम्झे जस्तो गरी भन्छे - "बरु भन्दा म चै भोलीपर्सी ठुलि भएर हिरोनी बन्छु अनी अंकल हिरोनीको ड्याडी बनिस्यो, हस् ?," म बोल्न सकिन।

" तिम्रो नाम चै के हो नानु ? What is your name ?," मैले प्रसँग बद्ले।

ऊ सोफाबाट जुरुक्क उठी र ठिङ्ग, सतर्क मुद्रामा उभिएर भनी -" My name is Aditi Sharma. I read in UKG. My mother's name is Parbati Sharma...."

अदिती ? त्यो नाम त...

पार्वती चिया लिएर भित्र पसिन्। मेरो अगाडिको टेबलमा चिया राख्दै भनिन् - "सरलाई"। मैले 'Thank you' भनेँ। ऊ हलुका हाँसी र भनी 'वेल्कम्।'

चियाको बाफ मेरो नाकमा आएर ठोक्कियो। त्यो बास्ना मैले चिनेको बास्ना थियो। कप उठाएर सुरुप्प पारेँ। त्यो स्वाद मेरो जिब्रोले चाल पायो। मेरो जिब्रो सायद कोमामा थियो, आज ब्युझियो। म टोलाउन थालेँ।

"सरलाई चिनी पुग्यो पुगेन ?," म टोलाएको देखेर होला सायद पार्वतीले सोधिन्।

"हैन हैन, ठीक्क छ," मैले भनेँ। "मिठ्ठो छ।," फेरी एक छिन् सुन्य भयो माहोल। अदितीको चियाको 'सुरुप' 'सुरुप' कोठामा छरियो।

"अनी वहाँ चै...." मैले भित्ताको फोटोतिर इसारा गर्दै सोधेँ। पार्वती अली मलिन भईन्। एकछिन् केही बोल्न सकिनन्। अनी छोरीतिर हेर्दै भनिन् - "छोरी, जाऊ त तिम्रो भोलीको होमवर्क गर। होमवर्क

सकाएर हामी घुम्न जाने।"

अदितीका आँखा तेजिला भए। ऊ जुरुक्क उठी र ममीतिर हेर्दै भनी - "काँ ममी? 'जु' जाम है!"

"हुन्छ, हुन्छ," पार्वतीले हाँस्दै भनिन्। अदिती दौडेर अर्को कोठामा पसी। मैले सायद अदितीको अगाडि सोध्न नहुने थियो। पैला नै भनीसके नि - म एस्ता कुरा जान्दिन! पार्वतीले आफ्नो श्रीमान बिहे भा'को एक हप्ता नबित्दै अमेरिका गएको कुरो बताइन्। पार्वतीलाई पनि उतै लाने बन्दोबस्त गर्दैथिए रे। तर एकदिन उस्को श्रीमान कामगर्ने ठाउँमा केही लुटेराहरु घुसेर ऊ माथी गोली चलाए छन्! त्यस्को दुई हप्तामा उस्को लोग्ने एउटा बाकसमा अमेरिकाबाट नेपाल फेर्किए रे!

यि सब कुरो बताई सकेपछी पार्वतीलाई सम्हालिन निक्कै समय लाग्यो। मेरो बारेमा पनि उस्ले अफिसका कर्मचारीहरुबाट सुनीसकेकी रहिछिन्। मलाई खान खाएर जाने आग्रह गरीन् तर म बस्न सकिन! अनी उस्ले स्वस्थानीको ब्रत बस्न लागेकी हुँदा बेल्का कथा सुन्न अनी खाना खान आउनु भनिन्। मैले 'नाई' भन्न सकिन।

बेलुका भयो। मन सारै दोधारमा थियो। जान्न, जान्न भन्दा भन्दै खुट्टाले त्यतै हिडाएँ। मलाई देख्नासाथ अदिती दौडेर मेरो हात समाउन आइन्। उस्ले मलाई सोफामा राखेर दिनभरको काहानी बताइन्। टाइगर, एलीफेन्ट, मङ्की, लायन आदी जम्मै भेटेर आ'की रे उस्ले 'जु' मा। उस्को बाल चन्चलता र बालहठ् देखेर म पुलकीत भएँ।

"मैले तिम्रो लागि के ल्याको छु, एता आऊ त," मैले अदितीलाई बोलाएँ। ऊ दौडेर आइ अनी दुबै हात अगाडि बडाउदै भनी - "ल म आँखा चिम्म गर्छु, अनी मेरो हातमा राखीदिस्यो।"

मैले उस्को एउटा हातमा क्याड्बरी र अर्को हातमा प्लास्टिकको बल राखीदिएँ। उस्ले आँखा खोली। उस्का आँखा प्रज्वलित भए। 'थ्यान्क्यु अंकल' भनेर बल उफार्दै ऊ बार्दलीतिर लागि। पार्वतीले स्वस्थानी किताब निकालिन्। हामी (म र अदिती) पार्वतीको अगाडि ज्ञानी छात्र-छात्रा भएर पलेटी कसेर बस्यौँ। पार्वतीले सुरु गरिन् - "कुमारजी आज्ञा गर्नुहुन्छ हे अगस्थ्य मुनी..." स्वस्थानीको पहिलो अध्याय सकेर पार्वती खाना पस्किन लागिन्। धेरै पछी, धेरै पछी मेरो अगाडिका थाल-बटुका यसरी ब्यबस्थित थिए...।

त्यसपछीका दिनहरुमा मलाई स्वस्थानी सुन्ने लत लाग्यो! म नआइ पार्वतीले स्वस्थानी सुरु गर्दिन थिईन्। आज पनि म बेलुका पार्वती र अदितीलाई भेटेर आएको छु। आज उन्ले तीन अध्याय पढेर

सुनाइन् - ६, ७ र ८। छैठौँ अध्यायमा सतीदेवीले अग्नी कुण्डमा हामफालेर आत्मदाह गर्छिन्। सतीदेवीका पिता दक्ष्यप्रजापतीले आयोजन गरेको अस्वमेघ यज्ञमा महादेवलाई नडाकेर अपमान गरेको सतीदेवीले सहन नसकी अनी आफ्नो पतीको अपमान सुन्न नसकेर यज्ञकुण्डमा होमिएकी हुन्छिन्। सातौँ अध्यायमा - महादेवको आदेशमा वीरभद्र र महाकाली अनी समस्त शिवगण मिलेर दक्ष्यप्रजापतीको यज्ञमा धावा बोल्छन्। त्राही त्राही हुन्छ ! यतीसम्म कि स्वयं बिष्णु पनि हार मानेर संग्राम भुमीबाट अन्तरध्यान भई बैकुण्ठ पुग्छन्। दक्ष्यप्रजापतीको टाउको काटीन्छ अनी पछी उस्की पत्नीले बिलौना गरेपछी वीरभद्रले बोकाको टाउको हालि दिन्छन्। त्यसै गरी आठौँ अध्यायमा कैलाश सुन्य गरेर गएकी सतीलाई सम्झी महादेव जोर जोरले छाती ठोकीठोकी रुन्छन्। सतीदेवीको मरेको शरीर लिएर चार भुवन डुल्न थाल्छन् - भौतारिदै !

आज पनि अदिती र मैले ध्यान दिएर सुन्यौँ। स्वस्थानी त पहिला-पहिला पनि पढेको हुँ, सुनेको हुँ तर यो पाली बल्ल बुझेँ, बुझ्दै थिएँ। पार्वती पढ्दा-पढ्दै बिचबिचमा धेरै अड्किन तर फेरी कथालाई निरन्तरता दिई रहिन्। कथा टुङिएन...

कथा सुनी सकेर म घर हिड्न भनेर निस्कैँ। भर्‍याङ्बाट ओर्लेर बाटोमा पुगेँ। "केसु अंकल," माथिबाट अदितीले बोलाइन्। मैले फर्केर माथि हेरेँ। पार्वतीले छोरीलाई कम्मरमा बोकेर मलाई नै हेर्दै थिइन्। त्यो हेराईले पुन: मलाई बिगतको याद दिलायो। मैले टोलाएर माथि हेरीरहेँ। अदिती ले आफ्ना हत्केलामा चुप्पा गरिन् र म तिर 'फु' गर्दै भनिन् - "ह्यापी भ्यालेन्टाइन्स् डे, केसु अंकल !" मेरा आँखा रसाए। एकनास बार्दलीमा हेरीरहेँ र तेसै गरी 'फु' गर्दै भनेँ - "तिमिलाई पनि......... तिमीलाई पनि !"

# लोग्ने मान्छे

बलराम - मेरी हजुरआमा कान सुन्नुहुन्न। ठुलो स्वरले कानैमा चिच्याए पछी मात्र २-४ शब्द टिपेर कुरोको सार बुझ्नुहुन्छ। दुई वर्ष भो काकाले बेलायतबाट कान सुन्ने मेसिन् पठाइदिन्छु भन्नुभएको। हजुरआमाले आस मार्नु भएको छैन। "कान त त्यो के जाती मेसिन् आएपछी सुनुँला, आँखा नि देख्न छाडेँ नाती," अस्ती भर्खर हजुरआमाले मलाई भन्दैहुनुन्थ्यो।

"तैँले के के सुन्छस्, के के देख्छस् मलाई कानमा आएर बता न बाबै," सेता खरानीको एक चिम्टी चोर औँला र बुढी औंलामा च्यापेर कपासको बाती कात्दै मलाई भन्नुभयो। हजुरआमाको देब्रे हातको फुसफुसे कपास, दाहिने हातले निमोठिदै लामो डोरी हुँदै तन्कन्थे। बेलाबेलामा बाटैमा चुटिन्थे। फेरी गाँस्नु हुन्थ्यो र ति जोडीन्थे अनी पहिला जस्तै सग्ला बन्थे। तीन फन्को लाएपछी मज्जाको बलियो 'बाती' बन्थ्यो। लाखबाती बाल्ने योजना बनाउनु भा'छ वँहाले, 'पित्रीको नाममा'!

हजुरआमाको कुरा सुनेर वँहाको चाउरी परेको अनुहार अनी हातका छाला जस्तै मुजैमुजा पर्छु म र केही बोल्दिन। बोल्न सके पो बोल्नु। मलाई डर छ - यदी हजुरआमालाई मैले देखेको, सुनेको कुरा बताँए र वँहाले मलाई -" अनी तँ के हेरेर बसिरा'छस् ?," प्रश्न गर्नुभो भने ? मैले के उत्तर दिने ? " म पनि 'चुप्चाप क्लब' को सकृय सदस्य हुँ," भन्नु भएन। ल ठीक छ कुनै बाहना बनाउँला - काम बढी भा'को, दाम कम भा'को, नेता भनौँदा नै उस्तै परे, आदी। तर के ति अनुभवी मन, मुटु र चेतले मेरो कुरा पत्याउलान् ? वहाँलाई अहिले टाल्टुले उत्तर दिएर पछी - " म तपाईंकै छोरीको छोरो हुँ...तपाईंकै नाती हुँ...." भन्दै कुन आधार र निधार लिएर दसैंमा टिका थाप्न जानु ? वहाँले पनि टाल्टुले आसिश दिनु भो भने ?

" सबै उस्तै त हो नि ! सब ठीक छ आमा," मैले कामचलाऊ उत्तर दिएँ।

" जो आए पनि 'सब ठीक छ', 'राम्रो छ' भनेर यो कान नसुन्ने बुढीलाई ठीक्क पार्छन् र जान्छन्। तँ पनि उही ड्याङको मुला न परिस्। तर बाबै... मलाई सब था हुन्छ - के ठीक छ अनी के नराम्रो छ। मेरा इन्द्रीयले मलाई सब बताउँछन्। तिमेरु जम्मैको उमेर भोगेकी छु मैले।" मेरो कामचलाऊ उत्तरमा

हजुरआमाले झर्को मान्नु भयो।

" घोर कलियुग लागेको छ आमा आजकल, खै के के मात्र सुनाँउ तपाईंलाई !," मैले अली ठुलो स्वरमा चिच्याएँ। अघीको काम चलाऊ उत्तर भन्दा दुईचार शब्द लामो।

" तेरा बोली पनि धोध्रिएछन्," वहाँले भन्नुभयो। मैले अघी भनेको सुन्नुभयो जस्तो लागेन।

"ए साँच्चै, ति थिन् नि... माथ्लाघरे काजीकी छोरी... के नाम हो ... सुद्दी पनी हराइ सक्यो कान र आँखा त गए गए। के रे नाती नाउँ?," प्रसँग बदि्लँदै हजुरआमाले सोध्नुभयो।

"सीता," मैले एताउती हेरेर अली जोडले भनेँ।

"अँ अँ गीता, सम्झेँ सम्झेँ।"

"गीता होइन हौ, सीता भन्या क्या सीता.. सी... ता..।" अली नजिक गएर ठुलो स्वरमा फेरी भनेँ।

"ए ए त्यसो भन् न त। सीता। अँsss सुनेँ सुनेँ।" बल्ल सुन्नुभयो।

"काँ छे त्यो सीते अचेल ? मेरो कपालका लट्टा फुकाउन आँउथि पैला-पैला। गोडा दुईएक महिनै पो भो त नाकमुख देख्दिन।" हजुरआमाले सोध्नुभयो।

सीताको अनुहार झ्वाट्ट मेरो आँखा अगाडि आए, बिलाए। "सीताराम सीताराम.........," गीत गाँउदै सीताको अगाडि टोलका केटाहरुले मलाई जिस्काको सम्झेँ। मनमनै हाँसो उठ्यो। फेरी मेरो नाम पनि बलराम। अगाडिको 'बल' झिकेर कहिले 'राम' त कहिले ‘रामे’ मात्रै भन्थे साथीभाइ। बिशेषगरी सीता ओरपर हुँदा त अचाक्ली नै हुन्थ्यो। घरमा बोलाउने नाम चैँ 'बले'। कोही चैँ हेपेर 'फुटबले' भन्थे। घरकालाई नाम चेन्ज गर्छु कत्ती भने। अर्जुन फिलिममा राजेश हमालको जस्तै 'अर्जुन' राख्न मन थियो। कतीपटक त ऐना हेर्दै - 'हेssss अर्जुन हुँ म, अर्जुन' पुरै एक्टिङ् गरेको छु। "स्कुलमा बलराम टिपाको छ, फेरी पछी नाम परिवर्तन गर्न झन्झट हुन्छ। यस्तो राम्रो भगवानको नाम पर्दैन फेर्न।" भनेर बाको गाली खाएपछी म फुच्चेको के लाग्थ्यो।

सीते एक साधारण घरमा जन्मिएकी असाधारण केटी थिइ। डिडी वान च्यानलबाट धेरै अघी आउने रामायाणकी 'सीता माता' भन्दा ठ्याकै उल्टी तर। सीते हाँसी भने लाग्थ्यो सुपर्नखा हाँसीराछे। एकदम निस्फिक्री। मिल्ने कुरो एउटै थियो - सीता र सीते नेपालमै जन्मेका। "कलिजुग कि सीता हुँ। मलाई लिन रावण आयो भने त्यस्को गेडा च्यापेर खसी बनाइदिन्छु," मान्छेका मुखिन्जी हाक्काहाक्की भन्दै

सुपर्नखा हाँसो छोड्थी। गाँउमा एउटा हल्ला भित्रभित्रै फैलिएको थियो - 'सीतेले नै उकासेर डल्ले सार्कीकी छोरी प्रमिला र उमाकान्त पण्डितको छोरो भरत गाँउ छोडेर भागेका हुन।' सीतेको अगाडि चैँ कोही चुँइक्क बोल्दैन थे। बोलुन पनि के? काच्चै खाइहाल्थी! मैले एकपल्ट जिस्काएर सोधैँको थिए - झन्डै मारिन। जे पनि गर्ने र जाँ जान पनि नडराउने स्वभावकी थि। होलीको दिन त झन बिजोगै पार्थी। सीतेको हातबाट अबिर नदलिने त सायदै कोही हुन्थे। साँझपख जब जम्मै जना होली सकाएर नुहाइ धुवाइ गरेर जिउको अबिर निखारेर सुकिला हुन्थे तब सुरु हुन्थ्यो सीतेको होली। अनेक अबिर र ढेडु रङ्ग दलेर हेर्न नहुने गती पारीदिन्थी। राती फेरी नुहाउनुपर्थो। गाँउका बुढाबुढीहरुसँग चै खुब मिल्थी। जे भाका बुढाखाडा भेला पारेर अनेक भजन सुनाउँथी। टपरी गाँस्ने, बाती काड्ने, सिलोक भट्याउने - जम्मैमा निपूर्ण। तर्क गरेर उस्लाई जितुलाँ भन्ने शायदै कोही थिए। हाम्रोमा आएर घण्टौँ हजुरआमासँग बात मार्थी ठुल्ठुला स्वरमा। भन्थी - "अनी आमा तपाईंको र हाम्रो बाजेको मायापिर्ती चैँ कसरी बस्यो?" हजुरआमा मरीमरी हाँस्नुहुन्थ्यो। धेरै भो मैले वँहा त्यसरी दिल खोलेर हाँसेको नदेखेको। स्कुलमा हुने अन्तर-सदनात्मक अनी स्कुल-स्कुल बिचहुने अन्तर बिद्यालय वक्तित्वकला प्रतियोगिता र वादबिवाद प्रतियोगितामा सधैं उसैले जित्ने। एक्पल्ट 'छोरीलाई शिक्षा कि सम्पत्ती' शिर्षकमा उस्ले 'सम्पत्ती' को तर्फबाट चर्को बिवाद प्रस्तुत गरेकीथि। उस्ले चोर औँलो प्रमुख अतिथीलाई ठड्याउँदै भनी - "प्रमुख अतिथी महोदय, हात्ती थोडै पढेर ठुलो भा हो? खै त यि उहिलेका बुढाबुढीहरुले स्कुल नटेकी, म्याथ-स्याथ केही नपढी पनि घरगृहस्ती चलाए त। औंला भाचीभाची भा पनि हिसाब किताब मिलाए त। नपत्याए सोध्नोस उनिहरुलाई - ब्रिद्धभत्ता कहिले आँउछ? कती आँउछ? ऐले सम्म कती आयो? के मा कती खर्च भयो? अब कती बाँकी छ? सब हिसाब देखाइ दिन्छन्, बिना क्याल्कुलेटर।" बिचरा प्रमुख अतिथी महोदयले मुन्टो अर्कैतिर बटारे।

...

मैले केही भनेजस्तो लागेछ क्यारे -"हँ फेरी भन त बा," भन्नुभयो हजुरआमाले। म झस्केर वर्तमानमा आइपुगेँ।

"केही होइन," मैले भनेँ।

"सुर्जे नारन काँ पुगे कुन्नी साँझबत्ती बाल्न अबेला त भा छैन नि?"

"छैन, छैन, दिँउसै छ" मैले भनेँ।

"अनी खै त सीतेको कुरो के हो बताउँदैनस्?"

## आरम्भ

"लौ त सुन्ने हो भने, अली कान थापेर सुन्नु," मैले आकाशतिर हेर्दै भनैँ।

"के रे बा ?"

"कान थापेर सुन्नु भनेको क्या।"

"ल ल"

...

खै थाह छैन मेरो कुरा हजुरआमाले कती सुन्नु हुने हो र कती बुझ्नु हुने हो तै पनि मैले लामो सास ताने र कतै केही नलुकाई बिस्तारमा सुरु देखी भन्न सुरु गरैँ -

" उमाकान्त पण्डित, जिल्लाका सामान्य कर्मचारी भएपनी माथि केन्द्रसम्म पौँच छ भन्छन्। मान्छेहरुलाई रीण, सापट चाहिएमा, भनेको ठाउँमा सरुवा गर्नु परेमा, सोर्सफोर्स लाउनु परेमा उनैकोमा पुग्छन्। खै कुन चैँ मन्त्रीको पर्सनल पूजारी पनि हुन रे। तपाईंलाई थाह नै छ भरत र प्रमिला भागेको कुरो! आफ्ना पौचले भ्याएसम्म छोरो भरतलाई खोजे, अझै खोज्दैछन्। कोही 'उमाकान्तले छोरो भेटे' भन्थे। कोही 'सार्कीकी छोरीलाई बेपत्ता पारेर आफ्नो छोरोलाई चैँ इन्डिया लुकाए उमाकान्तले' भन्थे। खाँटी कुरो के हो कसैलाई थाह छैन। उमाकान्तलाई सोध्ने आँट कस्को? भरत र प्रमिला भागेको ४-५ दिनपछी चारजना ज्याङ्गा केटाहरुलाई मैले खुद उमाकान्तको घरमा देखेकोथैँ। अरुले पनि ति केटाहरुलाई देखेको सुनाए। भरतले डल्ले सार्कीकी छोरी प्रमिलालाई भगाएको कुरो वनमा डढेलो लागे जसरी गाँउभरी सक्लियो। ओल्लोपल्लो गाँउमा पनि कुरो पुग्यो। सार्कीकी छोरी बाहुन केटोसँग भागेकीथी - त्यो चानचुने कुरा त हुने नै भएन यो ठाउँमा। भरत र प्रमिला भागेको करिब एक हप्तापछी डल्ले सार्कीकी कान्छी छोरी बाटुल्की एकाएक घरबाट हराइ। अत्तालिदै सार्की बुढाबुढी घरघर, चौकी-चौकी धाउन थाले - बालख छोरी खोज्दै। रातरात भर खोजे। छोरी घर आइन। सार्की बुढाबुढीको भोक-प्यास सबै उढीसकेको थियो। नउडोस पनि कसरी। सुकेर सन्ठी भए जोइपोइ। बाटुल्की हप्तादिन अघीमात्र १० बर्ष लागेकी थि रे। बाटुल्की बोल्न सक्दिनथि, सुन्न सक्दिनथि। सार्की दम्पतीको सम्पत्ती भनेकै दुइटी छोरी त थिए नि - प्रमिला र बाटुल्की। प्रमिलाले आफुखुसी गरेर हिंडेपछी बाटुल्की मात्र भइ घरमा।

बाटुल्की हराएकी तेस्रो दिनको साँझ सङ्गी खोलामा माछा मार्न गएका गाँउका केटाकेटीहरु 'लास, लास' चिच्याउँदै गाँउ पसे। एकछिनमा सारा गाँउ खर्लप्प उल्टिएर सङ्गी खोला किनारमा जम्मा भए।

म पनि दौडिए। दुईजना हवल्दार पनि त्याँ पुगेर घटनाको निरिक्षण गर्दैथे। एक किसिमको मेला नै लागेको थियो किनारमा। भिडले गर्दा नजिकबाट त हेर्न पाइन तर सार्की दम्पतीको चिच्चाहट, बिलाप निकै परपरसम्म सुनिन्थ्यो। भिड छिचोल्दै एउटा हवल्दार बाहिर आयो। उ फोनमा शायद माथि कसैलाई रिपोर्टिङ् गर्दै थियो - 'साप, खत्तमै छ यहाँको स्तिथी। हामी याँ पुग्दा, लास आदी पानीमा, आदी तटको हिलोमा थियो - उदाङ्ग शरीर। हामीले तानेर अली माथि ल्यायौँ। टाउकोतिर हिलैहिलो अनी कम्मर मुन्तिर त छ्यत्तबिछ्यत छ। जिउभरी निल्डाम छ। पानीले गर्दा लास फुलेर ढाडिएको बिरालोजस्तो भा'छ। लासको वरीपरी थुप्रै पदचाप थिए रे भिड लाग्नु अघी। मलाई त साप यो ग्याङ रेप हो जस्तो लाग्छ।' उताबाट त्यो हवल्दारले के आदेश पायो कुन्नी फोन राख्नासाथ दौडेर गएर भिडलाई तितरबितर पार्नेतिर लाग्यो। हवल्दार अनी दुईचार जना मिलेर अल्लीपर खाल्डो खनेर बाटुल्कीलाई हतार-हतार पुरे। छेउमा सार्की बुढाबुढी पुर्पुरोमा हात राखेर बसेका थिए। शायद आफ्नो भाग्यलाई सराप्दैथे ति। बाँकी जम्मै घर फर्के। भोलीपल्ट देखी बाटुल्कीको कथा एकादेशको कथा भयो। सार्की दम्पतीको न्यायको हारगुहार सुन्ने कान कतै भेटिएनन्। त्यस्को हप्तादिन पछी सार्की दम्पती गाँउ छोडेर अन्तै लागे......।"

...

सार्की दम्पती अनी बाटुल्किको कुरा भनिसकेर मैले हजुरआमालाई पुर्लुक्क हेरेँ। वँहाको आँखाका चेपचेप रसाएका थिए। दुवै हातका पन्जाहरु कसिएर मुठ्ठी बनेका थिए। मेरो पनि गला अवरुद्ध भयो। एक घुट्की थुक घुटुक्क निल्दै सोधेँ - " सुन्नुभयो ?"

" बुझेँ " बिस्तारै वहाँले भन्नुभयो। " अनी?" अझै सुन्ने इच्छा देखाउनुभयो हजुरआमाले।

...

म भन्दै गएँ - " सीते आफ्नी आमालाई लिएर जचाउन बेङ्लोर गा'कीथि। उ फर्केर आएपछी बाटुल्कीको बलात्कार अनी हत्याको खबर सब सुनेर रन्थन्नीदै चौकी पुगी। प्रमिला र सीतेकी मिल्ने साथी थिए र उस्की बहिनी बाटुल्कीलाई दुवै खुब माया गर्थे। सीते अब उग्रचण्डी बनेकीथी। चौकीमा पुलिसलाई हात हालिछ - दुईदिन थुनामा परी। सीतेकी आमा छोरी छुटाउन पैसा माग्दै हाम्रामा पनि आउनु भएको थियो। आमाले तीन हजार दिएर पठाउनु भयो र थप जोरजार गरेर सीते छुटी। 'किन छुटाउन आको ?' भनेर सीतेले आफ्नी आमालाई उल्टै थर्काइ रे! जेलबाट छुटेपछी पनि के चुप लागेर बस्थी! एकदिन रुद्रेको चियापसलमा एकाबिहानै गएर गाँउका ठुलाबडा भनौदालाई खुब झाँटी। आफ्ना

हातका चुरा खोलेर भनी रे - 'मा कसम अब उप्रान्त म यो चुरा लाउँदिन। यो तिमीहरुलाई मेरो उपहार भो। जाओ श्वासनीको फरियाभित्र लुकेर बस। ए नामर्द हो भोली तिमेर्की छोरीचेलीको त्यही दसा भयो भने, के गर्छौ ?' त्यहाँ उपस्थित सबै मुखामुख गरेर एकअर्कालाई हेर्न थाले।

'हेर सीते तैंले जती चिच्याए पनि, यहीँ सेरिएर मरिछस् भनेपनी केही हुनेवाला छैन। पाँच हुनेहरुले जे गरे पनि सहनुपर्छ। हामीलाई पनि आफ्नो परिवारको चिन्ता छ। हो त्यै चिन्ताले चुप लागेका हौँ। तँ पनि बिचार पुर्याएस्,' चिया सुरुप्प पारेर पत्रीका पट्याँउदै चन्दन काकाले भने रे।

चन्दन काकाको कुरोमा हँ मा हँ थप्दै कुवेर दाईले भने रे - 'सोहैं आना सही भन्नु भो चन्दनजीले। तलाईं था'छ छैन ? सार्कीकी छोरी र भरतलाई उकासेर भगाउने तैँ होस् भन्ने हल्ला छ। खाँटी कुरो के हो त्यो तँलाई नै था होला तर हामी तँ जस्तो जानी जानी अरिङ्गालको गोलामा हात हाल्ने पक्षमा छैनौ, बुझी राख। उ चन्दनजीले भनेजस्तै हामीलाई यो गाँउमा बाच्नु छ।'

चन्दन काका अनी कुबेर दाईको कुरो सुनेर सीतेका आँखा रिसले राता भए। उ ठुलै स्वरमा डाँको छोडेर रुनथाली। अनी छिनमै आँखाका आँसुहरु हातले पुछेर मिल्काइदी। चिया पसलकै एउटा भित्तोमा टाँगेर बेच्न राखेका पत्रीकाहरुतिर लम्केर पालैसँग पत्रीका थुत्तै छापिएका खबरहरुको हेड्लाइन चर्कोचर्को स्वरमा भट्याउन लागि –

'तीन वर्षपछी स्वदेश फर्केकी सीता राईको विमानस्थलका कर्मचारीले मिलेर दुई लाख रुपियाँ भन्दा बढी कमाई लुटे र पछी प्रहरीबाट बलात्कृत.....'

'लेटाङ-५ बस्ने एक बोल्न नसक्ने महिला बलात्कृत...'

'दक्षिणी रम्घा ५, दुइपिप्लेकी एक १५ वर्षीया किशोरीको सामूहिक बलात्कार...'

'दक्षिण भोजपुरको पात्लेपानी गाविसका दुई बालिका बलात्कृत...'

'धादिङको मैदीमा एक ८ वर्षीया बालिका बलात्कृत...'

'महोत्तरीको सिस्वाकटैया गाउँ विकास समितिमा गएराति बोल्न नसक्ने युवतीलाई बलात्कार...'

'ललाइफकाइपछि यौन हिंसा...'

'बारामा छ वर्षिय बालिकामाथी यौन दुर्व्यवहार...'

‘इलाममा चालु आर्थिक वर्ष २०६९/७० को छ महिनामा आठवटा यौन दुर्व्यवहारका घटना...’

त्यसपछी पत्रीकाको त्यो झुत्तो मान्छे भएतिर हुयाँउदैँ ‘यस्ता घटना त कती छन् कती, अझै सुन्छौ ? पढेर सुनाउँ ?’ भनेर सबका मुखमुखमा हेर्छे सीते। कोही चुँइक्क बोले त के! सबका टाउको भुइँतिर धसिएको थियो रे। सीते कसैले रोकेर रुक्नेवाली थिइन। फेरी चर्किएर बोली - ‘कहिले सम्म ? कहिले सम्म चुप बस्छौ ? हरेकदिन यो चियापसलमा आएर चियाको चुस्कीसँङ्गै पत्रीका पढ्छौ, समाचार सुन्छौँ, हेर्छौ। हत्या, अपहरण, बलात्कारका समाचार। चियाको चुस्कीको आनन्द लिदैँ जान्छौ अनी ति सबै दर्दनाक घटनाको समाचार पनि पढ्दै जान्छौ। तर अँह कसैको हात काँप्तैन, कसैको आँत कात्तैन। चियाको प्लेट हातबाट छुटेर खस्दैन। खै त हाम्रो संवेदनशीलता ? करुणा स्रोत ? मानव धर्म खै ?’

लामो सास तानेर आफुलाई नियन्त्रित पार्दै अली नरम शब्दमा सीते भन्छे - ‘यँहा बस्नुभएका सँग, चन्दनकाकासँग अथवा कुबेरदाइसँग मेरो कुनै दुस्मनी छैन। मैले यहाँहरुलाई मात्र अलग्याएर यो सब भनेकी होइन। तपाईंहरु म भन्दा जान्नेसुन्ने हुनुहुन्छ। सज्जन हुनुहुन्छ। मेरो बिचारमा यो सारा देशले बुझ्नु जरुरी छ कि खराब मान्छे धेरै छन् त्यसैले यो समाज ह्रासोन्मुख भएको होइन, जो सज्जन छन ति निस्कृय छन् त्यसैले ह्रासोन्मुख भएको हो। खराब मान्छेहरु संगठित छन्, एकबद्ध छन् - तर चन्दन काका र कुबेर दाई जस्ता सज्जन संगठित छैनन्। सज्जन संगठित नुहुनाले आज यो परीणाम देख्नु-भोग्नु परेको हो! हामीलाई दुर्जनहरुको दुर्जनतासँग कुनै खतरा छैन हामीलाई त सज्जनहरुको निस्कृयातासँग प्रबल खतरा छ। निभेको दियोको अँध्यारो कोठामा केही महत्व हुन्छ र ? अन्धकारलाई गाली गरेर, सरापेर अन्धकार मेटिन्छ र ?’

पसलमा सीतेको बहस सुन्नेको जमात निकै ठुलै लागिसकेको थियो। केटाकेटी, तरुनी, आमा, बजै जम्मैले सुने रे। भिँडतिर दुई हात जोडेर हेर्दै उ भन्दैथी - ‘म सम्पूर्ण आमाहरुलाई यो निवेदन गर्दछु कि आफ्नो हुनेवाला सन्तानलाई आफ्नो दुधमा करुणा, दया र सद्भावका साथसाथै आँट र हिँसाबिरोधक टोनिक पनि घोलेर पिलाउनु होला, बिन्ती!’ यती भनेर उ त्याँ बाट हिँडी रे। र यो नै उस्को जीवन अन्तिम वाक्य थियो।”

...

अब हजुरआमालाई यो भन्दा बढी भन्न सक्छु र वहाँले सुन्न सक्नुहुन्छ जस्तो मलाई लागेन। लामो सुन्यता छायो हामी बिच। "सुन्नुभयो त?" मैले हजुरआमालाई एकछिन पछी सोधेँ। वहाँ केही बोल्नु भएन। एकछिन पछी भक्कानिदै -"बुझेँ" भन्नुभयो। हजुरआमाका हातका मुठ्ठी अघीका भन्दा अझ बढी

कसिएका थिए। आँखामा कोशी बग्न थाले। मेरो पनि नाक रसाउन थाल्यो। गला अवरुद्द भयो। वहाँ केही भन्न खोज्दैहुनुन्थियो, सक्नुभएन र जुरुक्क उठेर कोठातिर पस्नुभयो। त्यतिकैमा एकहुल हावा आएर बाती काल्ने खरानीको थाली घोप्टाइदियो। आधाजती खरानी हावाले आँफैसँग लिएर भाग्यो। त्यो साँझ साँझबत्ती बालेर हजुरआमा निकैबेरपछी मात्र पूजाकोठाबाट निस्कनुभयो। मेरो कोठामा आएर भन्नुभयो -" नाती, तेरो काकाले कान सुन्ने मेसिन पठाउला.. खबर गर्दे है, पर्दैन भन्दे।" मैले केही भन्न नपाउँदै निस्केर जानुभयो। हजुरआमा सधैं छिट्टै सुत्नुहुन्थ्यो। त्यो रात बाती कातेरै छर्लङ पार्नुभयो। मलाई याद छ किनभने म पनि अर्को कोठामा सुत्न सकिराको थीइन। म सौँच्दैथैँ सीतेको कुरा। जसरी बाटुल्कीलाई मारे ठीक त्यसैगरी, त्यही ठाउँमा सीतेको पनि बलात्कार भयो। उ कती चिच्याइ होली, प्रतिकार गरी होली....।

यो देश किन ठुला मान्छेको पेवा भएको होला ? राम्रा मान्छे किन नअटाएका होलान् ? यसो झकाउन खोज्थैँ, अर्धनिद्रामा सीतेको चिच्चाहट सुन्थैँ र झस्किन्थैँ। के म साच्चै फुट्बले नै हो त ? मेरो मष्तिस्कमा गाँउका दिदीबहिनीको अनुहारहरु झल्याक्झुलुक आए। आफ्नै घरकी बहिनी आइ। नातागोता आए। मेरो माथा चड्केलाजस्तो भयो र च्याप्प समाएँ। अनी आँत बलियो पारेर भित्तामा टाँसिएकी दुर्गा मातालाई हेर्दै मैले मनमनै संकल्प गरैँ - हे भगवान ! आज म तिमीसँग केही माग्दिन। आज म तिमीलाई मेरो निर्णय सुनाउँछु – म सीते र अरु कयौँ सीतेहरुको लागि लड्नेछु। अराजकता र अब्यवस्थताको हिसाबकिताब मिलाउनैपर्छ नत्र 'सीता' र 'सीते' को यो देशमा कयौँ चेलीहरु गिद्देदृष्टिको शिकार हुनेछन्। अब म पनि न्याय र कानूनी शासनका लागि नागरिक अभियानमा लाग्नेछु। राजनीतिक संरक्षणका कारणले दबाईएका आवाज र मुद्दाहरूलाई उठाई न्यायको खोजीमा सङ्घर्ष सत्याग्रह गर्न भद्र अभियानमा म लाग्नेछु। अहिँसा र भद्रताका साथ न्यायको मागमा म पनि निरन्तर साथ दिनेछु। राष्ट्रब्यापी सत्याग्रह न्याय र न्यायिक शासन र महिला हिंसा बिरुद्धको भद्र राष्ट्रिय ऐक्यबद्धता हो। र अब हामी खोक्रो आश्वासनले मान्नेवाला छैनौ - Not this time!”

हाम्रा दिदी, बहिनी र आमाहरुको हकहितको संम्रक्षणमा हाम्रा दाजु, भाई र मामाहरुको सकृयता अत्यावस्यक छ। अल्छिपन, आलस्यता र निस्कृयताले हामी ग्रसित छौँ। हामी सबै कुरा 'राम्रो भइदिए हुने' भन्छौँ, आसे छौँ। म पनि यि सब हुँँ - अल्छि, आलस्य, निस्कृय अनी आसे।

त्यो रात मेरो झिमिक्कै नगरि बित्यो।

....

## आरम्भ

सबेरै पूजा सकेर हजुरआमाले मेरो निधारमा टिका लाइदिनु भयो। मेरो टाउकोमा हात राखेर आँखाको भाकाले 'बिजयी भव' को आषिक दिनुभयो। मेरो सौँच अन्य केही साथीहरुकोमा पसेर राष्ट्रब्यापी सत्याग्रहको बारेमा अझ बढी बुझ्नु-बुझाउनु र उनिहरुलाई पनी लाग्र आह्वान गर्नुथियो। म निस्किन मात्र लागेको थिएँ हजुरआमाले पछाडिबाट बोलाउनु भयो "ए नाती, पख त बा"...

वहाँले एउटा ठुलो झोला मेरो हातमा थमाउदै भन्नुभयो - " ला यो लगेर पसुपतीमा बालेश। लाख बाती पुरा छन्। लगेर सीतेहरुको नाँउमा बालीदे। अनी बातीको आगोमा ति सब राक्षसलाई पोलिदे, खरानी बनाइदे।" म केही बोल्न सकिन। झोला समातेर सरासर बाटो लागेँ। मैले पछाडि फर्केर हेरिन तर मलाई थाह छ मेरी हजुरआमाका ति बुढा आँखाले मलाई निकै पर सम्म हेरे, हेरिरहे....!

# राजिखुसी

"एउटा मात्र चक्र रे'छ तपाईंको," पशुपती जाने बाटोमा 'यहाँ हात हेरिन्छ' बाबाले मेरो हात हेर्दै भनेका थिए। "की राजा हुन्छन्, कि जोगी हुन्छन् एक चक्रेहरु।"

मेरी त्यो बेलाकी गर्लफ्रेण्ड पनि सँगै थिइन्। उनीले मलाई बोलाउने नामको न्वरान गरिन 'राजा'। म दङ्ग परेँ। मैले पनि छिल्लिदै 'म तिम्रो राजा, तिमी मेरी रानी,' भनेँ। ऊ बेस्मारी मस्केकी थिई। अनी हामी दुवै हातमा हात राखेर 'राजाको रानी से प्यार हो गया....,' गाउँदै पशुपती दर्शन गर्न ओरालो झर्यौं।

राजारानी मिलेर रोमान्टिक शहर पोखरा पनि पुगेका थियौँ केही समय अघी। फेवाताल, बिन्दबासिनी, बेगनास ताल, शान्ति स्तुपा, सराङ्कोट, लभ्ली डाँडा, पावर हाउस, फेवा पार्क लगायतका ठाउँहरुमा बेपर्वाह बत्तासिएका थियौँ। गर्लफ्रेण्डको नाम? त्यो चै नभनु होला है, माइन्ड नगर्नोस। त्यो बेला पो ऊ मेरी 'रानी' थिइन्। ऐले त ऊ अर्कै कि महारानी छिन्। मैले सुनेको त दुईटा घोर्ले युवराजहरुको सवारी पनि भइसक्यो रे! पोखराबाट फर्केको करिब दुई महिनापछी उनको बिहे भयो। हाम्रो चितवन जाने प्लान चौपट! औधी चित्त दुख्यो।

हामी झगडा गरेर अथवा परीवारले छुट्याएर अलग भा थिएनौ। दुवैको राजीखुसी नै थियो। एकदिन मैले उस्लाई चितवन जाने प्रस्ताव सुनाउँदा उस्ले 'लेट्स सि,' भनेकीथी। भोलीपल्ट आएर आफ्नो बिहे हुन लागेको कुरो बताई एउटा हार्डवेर पसलेसँग। मैले 'किन?' भनेर सोधेँ। मलाई अझै याद छ उस्ले भनेका कुरा। उस्ले भनेकीथि - "वेल मिस्टर दिलिप, तिमी राम्रो छौ, डन्ट गेट मि रङ्, तर तिमी 'नट ए हज्बेन्ड मटेरियल'। यु आर ओन्ली ब्वाइफ्रेन्ड मटेरियल। तिमी 'स्टेबल' छैनौ। तिमीसँग मैले धेरै रमाइला टाएमहरु बिताएँ एन्ड आइ थ्यान्क्यु फर द्-याट बट् जिन्दगी बिताउने तिमीसँग? आइ डन्ट थिंक सो! सरी।," …… यती भनेर ऊ फुइँफुइँ गर्दै फनक्क फर्केर गएकीथी। म त ट्वाँ परे! पुरै प्रतिकृयासुन्य भएँ। मैले बुझिन कि भर्खरै के भयो। एकछिन आफुलाई निहाँले मनमनै। परिवेसलाई समेट्ने कोशीस गरेँ। उस्ले भनेका कुराहरुको पोस्ट्मार्टम गरेँ। 'हज्बेन्ड मटेरियल' हैन रे 'ब्वाइफ्रेन्ड

म्टेरियल' रे ! 'स्टेबल' छैन रे ! म घोरीन थालैँ। के उस्ले मलाई धम्की दे'की हो ? कि उपदेश दे'की हो ? कि गाली दे'की ? जिस्केकी त पक्कै होइन। खैर जे दे'की हो, अघाउँजी दिएर गई।

उस्को मुखबाट सधैं 'राजा' भनेको सुनेको धेरै पछी मेरो नामै काडेर 'दिलिप' भनेर बोलाई। मलाई गाली गरेजस्तो लाग्यो। 'मिस्टर दिलिप' रे अझ ! रुनु न हाँस्नुको अवस्था भयो मेरो। किनभने यो पल्ट परेको 'लभ' पैलेपैले भन्दा अल्ली भिन्न थियो, म ठान्थे। अचम्म त के थियो भने म मा पनि 'फिलिङ्स' आउन थालेको थियो। अब बेला भयो घरजमको, सोच्न थालैँको थिएँ। निला हैन दिल गिला चलचित्रमा रुची बड्न थालेको थियो - 'राजा हिन्दूस्तानी', 'हम दिल दे चुके सनम', 'दिल' आदी-इत्यादी। यि सिनेमा हेर्दा कतीपल्ट उनी मेरो काँधमा सुक्सुँकाएकीथि। उनी नै मेरी आफ्नी हुन भन्ने तगडा विश्वाश पलाउन थालेको थियो म भित्र पनि। अनी मैले भित्र-भित्र योजना बनाएँ - चितवनमा विवाहको प्रस्ताब राख्ने योजना। तर चितवन पुग्नु अघी नै मेरो चित्त चुडेर लगी मोरीले - भारी भर्कम डाइलगका साथ। ति गालीहरु खान म कुनै पनि एङ्गलले 'प्रीपेएर्ड' थिइन।

त्यसपछीका केही दिनहरु निक्कै नै असन्तुलित रह्यो। आफु टुलुटुलु उभिएर उन्का नानाभाती कुराहरु सुनीमात्र रहेकोमा साह्रै 'रिग्रेट' भयो। उस्ले मेरो जिन्दगीको कागजमा मिठा-मिठा सपनाहरु लेखि अनी खै के सोचेर हो त्यो कागजलाई पैला त चार टुक्रा पारी अनी कच्याक्कुचुक पारेर हुर्याइदी। एकपल्ट खुम्चिएको, च्यातिएको कागज फेरी पैलाको जस्तै सग्लो बन्न सक्छ र ? च्यातिएको पैसालाई टेपले टालेर चलाएको त देखेकोछु तर कागजको के मोल होला र कसैले टिपेर टाल्नलाई ? - 'सी डम्प्ड् मि,'!

अब ऊ फेरी नयाँ पाना पल्टाउँदै थीइ जस्मा मेरो नामो-निसान हुनेछैन। सायद त्यो हार्डवेर साहुको नाम बाट सुरु गर्छे होला हेडिङ्ग लेख्न। यि सब कुराहरु सोच्दै म मुरमुरिन्थैँ - त्यो दिनको द्रिस्यहरु मेरो दिमागमा मन्डराउन थाल्थे। मैले पनि भक्कु मुखभरी जवाफ दिनुपर्नेथ्यो, म सौँच्थे। मैले हान्नुपर्ने डाइलगहरु नहानेकोमा साह्रै थक्कथक्क हुन्थ्यो। उस्को बिहेमा गएर हिन्दी फिलिममा जस्तो 'ये सादी नही हो सक्ती,' भनेर गड्गडाउने सोच बनाएँ। तर जतीजती उस्को बिहेको दिन नजिकिदैँ गयो उती उती मन मर्दै गयो। 'ये सादी सायद हो भि सक्ती हे,' हुँदै 'आ.., होने दो सादी,' मा गएर मन अढियो। फिलिमले जिन्दगीलाई अप्नाएर कथा बोल्न सक्ला तर जिन्दगीले फिलिमलाई अप्नाउन कहाँ सकिदोरै'छ र ! ऊ सुनामी बनेर आइ अनी 'कट्रिना' आँधी बनेर मलाई सोत्तर पारेर गई - थुइक्क !

मैले अघी नै 'हामी राजीखुसीले छुटेका,' भने है ? अनी फेरी अनेक आलाप गर्दै पनि छु। माथि भनेको कुरालाई अलीकती सच्याउँछु है त - उनी राजी थीइन। म खुशी भइन।

# समय अन्तर

## १.

"आइ लभ् यु कब्ते !"

"पख् मेरो ममीलाई भन्दिन्छु।" कबिताले कालो मुख लाएर धम्की दिई। मेरो सातोपुत्लो उड्यो। हतार हतार "हैन हैन आइ हेट् यु, आइ हेट् यु... ममीलाई नभन्दे है," रुन्चे आग्रह गरेँ।

एकदिन स्कुल जाँदै गर्दा कब्तेको ममीले साफ झाटिन् बाटैमा - "एत्रो फुरौलो जस्त्रो छ, खुब लभ् गर्ने हैँ ? कती किलास पुगिस् ?"

मैले "क्लास फाएभ" भनेँ बिस्तारै।

"खुब आफुलाई 'अम्ता बचन' भन्ठान्छेस्? तेरिमा गुइँठे ! हेड्सरलाई भनेर तँलाई रेस्टिकेट गरिदिउँ कि अब देखी कब्तेलाई आइ लभ् यु भन्दिनस् ?"

"नाई अब देखी भन्दिन अन्टी। हेड्सरलाई नभन्दिनोस्।" मैले रुन्छे स्वरमा भनेँ।

भोलीपल्ट देखी कब्तेको घरको बाटो छोडेर लामो बाटो स्कुल जान थालें।

कब्ते पढाईमा तिखी थि। हरेक बर्ष 'प्यारेन्टस् डे' मा पुरस्कार थाप्थी। सबैले उस्लाई 'फस्ट गल' भन्थे। स्कुलमा कताबाट हो हल्ला फैलिसकेछ। मलाई 'फस्ट गलको ब्वाइ' भनेर जिस्काउन थाले। म रिसाइ दिन्थे। ति के चुप लाग्थे- जिस्काइरहे।

त्यस्को पाँच बर्ष न म कब्तेसँग बोलेँ न कब्ते मसँग बोली। तँ चुप , मै चुप।

...

एकदिन टिफिनमा पाँचौ घन्टीको होम्वर्क भटाभट सार्दै थिँए - मन्जितको कापीबाट।

"सरी है," केटी आवाज मेरो कानमा ठोक्कियो। टाउको उठाएर हेरेँ। पातलो मुस्कान छोड्दै कब्ते अगाडी ठिङ्ग उभिएकीथि। मेरो नौ नाडी गलेर आयो। धामीले ढ्याङ्ग्रो ठट्टाए भन्दा जोडले मेरो मुटु ढ्याङ्ग्रिन थाल्यो। निधार र कन्चटतिरबाट पसिना उम्रिन थाले - चिट चिट। दिसा लाग्ला जस्तो भयो। पिसाब च्याप्यो। तै कसो कसो रोकेँ। अनेक तरङ्ग, प्रश्न, उत्तर ठेलमठेल गर्दै दिमागमा आए। त्यसतो डर त मलाई त्यो 'पुरानी हवेली' भन्ने भुतको फिलिम हेर्दा पनि लागेको थिएन। म किन डराको तर? खै, किन किन! मेरा दुबै आँखा पेनको टुप्पोमा गएर अडिए, अडिइरहे।

"साइन्सको होमवर्क सारिरा ?," उस्ले सोधी।

"अँ, होम्वर्क कापी घरमा छुटेछ, सो..." मैले बाहना बनाएँ। मेरा आँखाहरु पेनको निबमै थिए। मनमा चैँ यो केटी यहाँबाट गए हुन्थ्यो झैँ लागिरहेको थियो- कसैले देख्यो भने म त बर्बाद हुन्छु। फेरी कता कता मनभित्रको पनि मनमा चै कौतुहलता थियो। उस्लाई पनि पक्कै अफ्टेरो भएको हुनुपर्छ। हातमा लाएका पित्तलका औंठी घुमाउदैथी जोडजोडले। अफ्टेरो भए किन आइ त यो पाँच-पाँच बर्षपछी मसँग बोल्न एक्कासी ?

"त्यै सरी भन्न आकी, सरी ल !," उस्ले भनी।

मैले पनि हिम्मत जुटाएर भनेँ "के को सरी हो, मलाई त था पनि छैन।"

"मैले गर्दा तिमीले ममीको गाली खानुपऱ्यो," उस्ले दबेको स्वरमा भनी। म चुप रहेँ - अझै थाहा न'भा जस्तो गरेर पुलुक्क हेरेँ।

"क्लास फाएभमा के त," उस्ले फेरी भनी।

"ए अँ, मैले त बिर्सी पनि सकेकोथेँ" मैले स्वाङ् पारेँ।

"ए हो र ?" उस्ले भनी। "म त तै भएर तिमी मसँग नबोलेको होला भन्ठानेको। म सँग रिसाको त छैन नि ?"

"छैन, त्यो बच्चा बेलाको कुरा अब के...." मैले भनेँ।

ऊ पनि डराएकी जस्ती देखिन्थी। हातको औंठी छोडेर अब ऊ टाई बटार्न थालेकीथि। बोलीमा पनि

एक किसिमको कम्पन थियो। ऊ डराएकी देखेर मलाई हौसला आयो-कस्तो अचम्म ! म भन्दा बढी ऊ डराएकोले म निडर भएँ क्यार !

"मेरो पनि सरी है," मैले उस्लाई हेर्दै भनेँ।

"तिमिले चै के को सरी नि?," अचम्म मान्दै उस्ले सोधी।

"आइ हेट यु भनेकोमा," मैले भनेँ। ऊ हाँसी। म पनि हाँसे। हामी दुबै हाँस्यौ। टिफिन सकिएको घन्टी बज्यो -टिङ-टिङ-टिङ-टिङ-टिङ-टिङ। ऊ दौडेर आफ्नो बेन्चमा गई। मेरो आधा होमवर्क सार्नै बाँकी थियो। सरले पुरा होमवर्क नगरेकोमा मुर्गा बनाए। यो पल्ट मुर्गा बन्दा जस्तो खुशी कहिलै लागेको थिएन।

२.

घरको फोन बेल्का बेल्का बज्न थाल्यो - दुई रिङ् बज्थ्यो, फेरी बन्द हुन्थ्यो। दौडेर उठाउन गयो फोनले दम तोडिसकेको हुन्थ्यो। मैले पनि दुई रिङ् दिन थालेँ। रिङ् धेरै बजे तर फोन उठेन - न एता न उता। आहा ! फोन को रिङ् पनि मिठो संगीत लाग्नथाल्यो। उता फोन उठिहाल्यो भने मैले के भन्ने ? किन फोन गरेको सोधी भने, किन भन्नु ? कुरा गर्ने कुरै नहुँदा पनि खै के सोचेर फोन डाएल गर्थे कुन्नी ! एकपल्ट कब्तेको आमाले एकै घन्टिमा फोन उठाइन र पड्किन -"को हो हँ ? काम पाएन अर्थोक ? मर्न नसकेका असती।," मैले हत्तपत्त फोन राखेँ। कब्तेका साथीहरु मिलेर 'ब्लफ कल' गर्थे कैलेकैले। 'तिमी त क्या ह्यान्सी' भन्दै मलाई फुरुङ्ग पार्थे। म पनि 'तिम्रै लागि हो' भनेर जिस्किदिन्थेँ - बालै भो !

नयाँ बर्ष मुखैमा थियो। सबैले सबैलाई शुभकामना आदान-प्रदान गर्न थाले - ह्यापी न्यु यर २०५७! मेरो लागि यो आउन लागेको नयाँ बर्ष अली बिशेष भयो। कविताको पोस्कार्ड पाएँ- पहिलोपल्ट। पोस्कार्डमा ह्रितिक रोशन बाइसेप फुलाएर हाँसीराथ्यो। पछाडि लेखिएको थियो –

*“Be always happy, not sad*
*Be always good, not bad”*
*Happy New Year 2057*.
From: Kabita Mainali
To: Ravi Devkota

मैलेपनी उत्तर उत्तर प्रगतीको कामना गर्छु भनेर शुभकामना सन्देश पठाएँ। आफुलाई मन पर्ने हिरोइन करिसमा कपुरको पोस्ट्कार्डमा। उस्को कार्ड पाएको बेलुका राम बिलास हजामकोमा गएर 'रितिक कट' भनेँ। रामबिलासले बुझ्यो र आफ्नो कला मेरो टाउकोमा उतार्यो। राती घर फर्केर 'एक पलका जिना, फिर तो हे जाना' कहो ना प्यार हे फिलिमको गीतमा ढोका थुनेर गोडा फट्टाउँदै नाचेँ - ऐना हेर्दै। पछी 'ह्रितिक काण्ड' हुँदा स्कुलको क्यान्टिनमा साथीहरु मिलेर पोस्कार्ड धुजाधुजा पारे र अगेनोमा हुर्याइ दिए। केटाहरुको अगाडि ठीक्क पार्दै 'अँ हो, नेपाललाई हेला गर्ने। जलाओ केटा हो यस्लाई' भनेर खोक्रो राष्ट्रभक्ती देखाएँ। अरुअरुले पनि धेरै फोटाहरु जलाए। कतीले जुत्तामा टाँसेर हिंडे। तर साच्चै भन्नु पर्दा उता ह्रितिकको फोटो धुजाधुजा हुँदैथियो, एता मेरो मन। उता ह्रितिकको फोटो अगेनोमा जल्दैथियो, एता म जल्दैथेँ भित्र भित्र। कब्तेले पोस्कार्ड पछाडि लेखेको सम्झे 'Be always happy, not sad…' र मात्र अल्ली शान्त भयो मन!

…

"जा न जा, कस्ती डर्पोक्की! जा के जा कब्ते, दे गएर, "

एकदिन टिफिनमा कबिताका साथीहरुले उस्लाई भनेको सुनेँ। म केटाहरु लुडो खेलेको हेर्दैथेँ क्लास कै एक कुनामा बसेर। मेरो आँखा लुडोमा भएनी कान केटीहरुको गफमा थियो। केटीहरुमा पनि कब्तेले के बोल्ली भन्नेमा थियो। कब्तेले सरी भनेको मैले गोपाल (गोफ्ले) लाई 'कस्सैलाई नभन है,' भनेर भनेको थिएँ। मोरोले 'ल यार' भनेर सब्बै कुरा सुन्यो र पछी बिनोद (कोपरा), अनुप (तोरी), जितेन (हगुवा) अनी मन्जित (चट्याङ) हुँदै क्लासभरी फैलाएछ। अब त खुल्लमखुला 'रभी इज फर कबी' भन्दै जिस्काउन थाले। म रिसाइदिन्थे, जस्तो गर्थे। गोफ्ले र तोरीले जिस्काउन सुरु गर्थे अनी बाँकीले साथदिन्थे। एकदिन चट्याङले उक्सायो -"ज्यामिती बक्स भित्र लभलेटर हालेर दे फुरौलो! म सँग लभलेटर प्याड नि छ टाइटेनिकको हिरो-हिरोनी वाला, चाहिन्छ ?"

"उत जा !" म झर्केँ। लेटर लेखिन, के लेख्ने ? ममीलाई देखाइदी भने फेरी ?

…

निकैबेर उस्का साथीहरु (रितु, श्रध्दा, माल्स्मा, प्रतिज्ञा)ले करकर गरपछी कब्ते म भएतिर लम्की। मेरो छाती ढक्क फुल्यो। तोरीले 'ओइ फुरौलो, कब्ते आइ' मलाई कोट्याउदै भन्यो। मैले नसुनेझै गरेँ। तर मैले उस्को प्रतेक पाइला पाइला सुनीरा'थेँ।

"रबी"

मैले पुलुक्क हेरेँ। केटाहरु उठेर 'ल हाम्रो त्यो काम छ' भनेर नभाको काम बनाएर मस्किदै क्लासबाहिर निस्के। म एक्लो भएँ त्या अब।

"एस्" भनेँ कब्तेलाई पुलुक्क हेर्दै। केटीहरुको जथ्थाको मसिनो खितीती प्रस्ट सुनिन्थ्यो। कब्तेको हातमा एउटा डायरी जस्तो खै के थियो।

"इ यो," दिउँ कि नदीउँ जस्तो गरी उस्ले एउटा डायरी मेरो तर्फ बढाई।

३.

"के हो यो ?," मैले सोधेँ

"अटोबुक... भर्दिन्छौ कि भनेर... " उस्ले अनकनाउँदै भनी। मैले टाउको हल्लाएर हुन्छको इसारा गरेँ। "फोटो नि हाल है प्लिज" उस्ले भनी।

“ओ. के.” भनेर अटोबुक ब्यागभित्र हालेँ।

"जान्छु ल?" उस्ले सोधी। मैले केही भन्न नपाउँदै घन्टी बज्यो -टिफिन सकिएको। घन्टी नबजेको भए शायद "एक छिन बस न" भन्थेँ होला तर घन्टी बज्यो अनी ऊ दौडेर आफ्नो बेन्चमा पुगी। साइन्स टिचर कोठामा छिरे। टिचरले 'माइटोसिस', 'मियोसिस', 'सेल डिभीजन' के के जाती पढाउदैथे - फिट्टो बुझेको हैन, ब्लाक्बोर्डमा ध्यान भा पो बुझ्नु ! एनिमल अनी प्लान्टको सेल भित्र 'क्रोमोजोम' होस् कि 'क्रोलोफिल'- जे सुकै होस् मलाई छु मत्लब ? मलाई त त्यो कब्तेको अटो भित्र के छ त्यो पढ्नु थियो। कब्तेको अटोमा कुन फोटो राख्ने होला त्यो खोज्नुथियो। उस्लाई के मनपर्छ त्यो बुझ्नुथियो, बाँकी जम्मै गौण।

घर पुग्नासाथ ब्याग खोतलेर अटो निकालेँ। बास्ना आउने वाला अटो रै'छ। बाहिर कभरमा मिकीमाउस, डोनाल्डक, अनी बार्बापापाका स्टिकर थिए। भित्र पल्टाएर हेरेँ - कब्ते हासीँराथी। कब्तेलाई मैले प्राय सधैं त्यै स्कुलको ड्रेसमा मात्र त देख्थेँ नि - कालो जुत्ता, घुँडासम्म निलो मोजा, निलो फ्रक, सेतो सर्ट, रातो टाइ अनी सेतो रिबन कपालमा। तर यो फोटोमा कब्ते रातो कुर्था सुरुवालमा सेतो सल लाएर घरको भर्याङ्ग्मा टुसुक्क बसेकीथी। छोटो कपाल भए नि हेरबीन लाएकीथी टाउकोमा। आँखा कम्जोर भएकोले चस्मा त ऊ जहिले लाँउथी। उस्लाई 'चार आँखी' 'चस्मिस' भनेर जिस्काउँथे साथीहरु। मलाई

नि जिस्काउन मन त थियो नै तर हुनुपऱ्यो नि आँट ! उस्को अर्को पनि फोटो थियो त्यो अटोमा । त्यो दोस्रो फोटोको छेउमा लेखिएको थियो- 'दीस इज मी इन् क्लास फाएभ !' “King loves golden ship, queen loves silver ship, But I love friendship” भनेर लेखेकीरै'छ टुप्पोमा । अली मुन्तिर लेखेकीथी -'Auto is मोटो, Don't forget फोटो'।

मन पर्ने फिलिम - डि. डि. एल. जे.

मन पर्ने हिरो - ह्रितिक रोशन

मन पर्ने हिरोइन - काजोल

गित - सेन्टिमेन्टल

हब्बी - सिङ्गीङ, डान्सिङ.....।

अरुले पनि भरेका रै'छन कब्तेको अटो । रितु, श्रध्दा, माल्स्मा, प्रतिज्ञा, मन्जित, अनुप, बिजय, प्रसुन, राज, जितेनहरु जम्मैले आ-आफ्नो फोटो राखेकारे'छन् । मैले पनि आफ्नो सिङ्गल फोटो टाँसिदिए कब्तेको अटोमा । ‘Thank you for giving me this opportunity to jot down my words in your golden autograph....’ भनेर धन्यवाद दिएँ । आफुलाई मनपर्ने हिरो, हिरोनी आदी लेखिदिएँ । अटोको अन्तिमतिर ह्रितिकको सानो फोटो नि टाँसिदिए - बाइसेप फुलाएर हाँसेको । ह्रितिकको फोटोको छेउमा 'कर्सिभ हेन्डराइटिङ' मा लेखेँ – ‘I have a pen that is blue, I have a friend that is you.’

साइन्स पनि कब्तेको अटो जत्तिकै रोचक - हेरिरहुँ, पढिरहुँ लाग्ने भा'को भए मलाई कसैले जित्छु भनेर नोसोचे नि हुन्थ्यो होला !

...

कोही ठुला मान्छे मरे भने एक मिनेट मौन धारण गरेर स्कुल छुट्टी हुन्थ्यो । चक्काजाम, हड्ताल, नेपालबन्द त कती हुन्थ्यो कती । त्यसमाथी जाडोको, गर्मीको, चाडपर्वको बिदा त छदैँ थियो । अझ त्यतीले नपुगेर कहिले शनिबार आउला जस्तो लाग्थ्यो । तर कब्तेले 'सरी है' भनेको दिन देखी मलाई कोही नमरे नि हुन्थ्यो जस्तो लाग्न थाल्यो । शनिबार नै नआए नि हुन्थ्यो, कुनै दिन पनि बिदा नपरे हुन्थ्यो जस्तो लाग्न थालेको थियो । झन् यो नेपालबन्द, हड्ताल, चक्काजाम गर्नेहरुसँग त रिसले चुर हुन्थेँ ।

क्लासमा एउटा दुधभात थियो - राकेश। राकेश केटाहरु, केटीहरु दुबै माझ 'पपुलर' थियो। पिक्निक, पार्क, स्विमिङ, आदी घुम्न जाने प्लान उसैले बनाउथ्यो। केटीहरु पनि अरु केटाहरु भन्दा उसँग चै खुलस्त जिस्किन्थे, मस्किन्थे। ऊ क्लास मनिटर पनि थियो। केटीहरुको कुरा एता आएर केटाहरुलाई सुनाउथ्यो। कुन केटीले कस्लाई मनपराउछे उस्लाई सब थाहा हुन्थ्यो। केटाहरुको कुरा पनि भन्थ्यो होला केटीहरुलाई तर हाम्लाई चै 'म केही भन्दिन' भनेर ठीक्क पार्थ्यो। चट्याङको लभलेटर उसैले लगेर अर्को सेक्सनकी संगीतेलाई दे'को त हो नि! बिचरा चट्याङको लेटर त हेड्सरको अफिसमा पुगेछ। रामधुलाई भेट्यो केटोले!

“ओइ फुरौलो, तेरो त्यो चस्मिसलाई सेक्सन बि को कुल्दिपसँग कुरा गरिरा देखेँको थेँ, होस गर है," एकदिन राकेसले सुनायो। "दुबैजना खुब हाँसीहाँसी कुरा गर्दैथे।"

"मलाई बाल!" म झर्किएँ। "जस्ले जो सुकै सँग कुरा गरोस् "

"कुल्दिपेले उडाइदेला है साले," राकेशले खिस्क्यायो। “कब्तेले हातमा लाएकी फ्रेन्डसिप ब्यान्ड कुल्दिपेले नै दे'को रे!”

"उडाए उडाओस्," मैले मुटुमाथी ढुङ्गा राखेर भनेँ। मनमा अनेक तरङग उठे। राकेसको कुरा सुनेदेखी कब्तेलाई धेरैजसो सेक्सन बि मा देख्न थालेँ टिफिनमा। एकपल्ट हाम्रो सेक्सन र सेक्सन बि अन्ताक्षरी खेल्ने भयौँ। 'त' बाट कुल्दिपेले -तु चिज बडी हे मस्त मस्त, तु चिज बडी हे मस्त- कब्तेलाई हेर्दै गा'यो। कब्तेले नि कुल्दिपेलाई हेर्दै 'ह' बाट - हम्को सिर्फ तुम्से प्यार हे, हम्को सिर्फ तुम्से प्यार हे- गाइदी। मलाई उकुसमुकुस भयो। रिस उठ्यो - कुल्दिपेसँग अनी कब्तेसँग त झनै रिस उठ्यो। भित्रभित्र मुर्मुरिएँ, बाहिर जस्तो देखिएपनी। अन्ताक्षरीमा हाम्रो सेक्सनले जित्यो तर मैले हारेँ -कब्तेलाई। मसी सकिएको पेन जस्तो सुख्खा भएँ म। कागजको हावाइ जहाज जस्तो उड्नै नपाई क्रास भयो मेरो सपना। हिसाब नमिलेर अड्के जस्तो... बिचमै अड्के म। किताब भित्र राखेको गुलाबको फुलको पात जस्तै मेरो ओठमुख सुके। कतै कब्तेले गा'को गीत साच्चै कुल्दिपेको लागि त हैन ? म झस्किन्छु। त्यो रात कोल्टे फेर्दै बित्यो।

भोली भयो।

"ओ चट्याङ तँ सँग त्यो टाइटेनिकको फोटोवाला लेटर लेख्ने छ ?," मैले मन्जितलाई सुटुक्क सोधेँ।

"ल ल के हो फुरौलो, कस्लाई हो ?," उस्ले छिल्लिदै सोध्यो ।

"छ कि छैन भन् न, मेरो एक जना साथीले मागीराथ्यो क्या सो..." मैले कुरो दबाउन खोज्दै भनैं । तर मोरोले के पत्याउथ्यो ! चव्याङ्ले फेरी हेड्सरको झापड खाने डरले हो क्यार 'छैन' भन्यो । झापड खानु परे नि खाँउला - मैले निर्णय गरैं । चव्याङ्ले मलाई लेटर प्याड किन्ने ठाउँको नाम बतायो - श्री स्टेसनरी । मैले लेटर लेख्ने सोच त बनाएँ तर त्यो लेटरप्याड किन्ने पैसा थिएन । माया लाउन पैसा नि चाहिनेरै'छ, बल्ल बुझ्दैथैं । जे पर्ला पर्ला भनेर खुत्रुके फुटाएँ र चिल्लरहरु भेला पारैं । पचास रुपैयाँ रै'छ । दौडेर पुगैं श्री स्टेसनरी र चव्याङ्ले भनेजस्तै खाल्को लभलेटर प्याड लेर आएँ । राती घरमा जम्मै सुतीसकेपछी ब्यागबाट लेटरप्याड निकालैं । एफ.एम खुल्लै थियो अनी योगेश्वोर अमात्य मन खोल्दै थिए - *“जब सन्ध्या हुन्छ, दिल मेरो घबराउँछ... तिम्रो मिलनको आसमा... अध्यारोले सताउँछ ...”*

## ४.

_____ कबिता,

म रबी देबकोटा, तिम्रो क्लासको रबी । कबिताको अगाडि प्रिय, प्यारी, मेरी... के भनेर संबोधन गर्ने थाहा नभएर '_____ कबिता' लेखेको हुँ । त्यो खाली ठाउँ भर्ने जिम्मा तिम्रै भो ! यो लेटर तिम्रो मम्मी, हेड्सर अनी तिम्रो मिल्ने साथीहरु - कस्सैलाई पनि नदेखाउ है, please ! बरु पढिसकेपछी मनपरेन भने च्यातेर हुर्याइदिए नि हुन्छ । मैले यस्तो 'लभ लेटर' पैला कहिले पनि लेखेको छैन, यो नै पहिलो हो । नेपाली सब्जेक्टमा 'छात्रब्रितीको लागि निवेदन', 'बुवा-आमालाई चिठ्ठी' जस्ता ५ मार्क्सको चिठ्ठी मात्र लेखेकोछु । एकपल्ट मन्जितले संगितेलाई लेखेको 'लभ लेटर' पढेको थिएँ, त्यती हो । फेरी मलाई एस्तो खाल्को माया पहिला कसैसित पनि लागेको थिएन, तिमी नै पहिलो हो - सत्ते । यादै होला क्लास फाएभ - त्यो बेला त माया के हो नि थाहा थिएन । तै पनि तिमीलाई माया गर्दोरै'छु । तिमीसँग बोल्न कत्ती कोशीस गरैं तर अँह हिम्मत जुटाउनै सकिन । तिम्रो उधुम डरलाग्थ्यो । फेरी तिम्रो मम्मीले रेस्टिकेट गराइदिन्छु नि भन्नुभाथ्यो । तै भएर चुप बसैं । शायद तिमीले ख्याल गरेकी छैनौ होला तर म तिमीलाई अरुको आँखा छलीछली हेरीरा'हुन्छु । मलाई तिमी एकदम मनपर्छौ । तिमी त्यसरी पाँच-पाँच बर्षपछी म सँग बोल्न आउँदा मलाई विश्वास नै भएन सुरुमा त । त्यो दिन आजसम्मको मेरो सब्बै भन्दा खुशीको दिन होला । नयाँ बर्षको पोस्कार्ड पाउँदा पनि मेरो खुशीले भुइँमा खुट्टा थिएन । साथीहरुले नि खुब जिस्काउँछन् तिम्रो नाम लिएर। शायद तिमीलाई पनि जिस्काउँदा हुन् । म

तिमीलाई साच्चैको मन पराउँछु। त्यै भएर I Love You भन्नको लागि यो लेटर लेखेको हुँ। मबाट तिमीले कहिल्यै धोका पाउने छैनौ कबिता! म भित्र तिम्रोलागी सिर्फ मायै माया छ। यदी तिमीलाई पनि म मनपर्छु भने भोली बेलुका छ बजे मेरो घरको फोनमा दुई रिङ् मिसकल देऊ है, म बुझ्ने छु। फोन बजेन भने पनि बुझ्नेछु। अहिलेलाई यो कलम बन्द गर्दैछु! Bye.

तिमीलाई मायागर्ने,

रबी देबकोटा (क्लास टेन, सेक्सन A)

--------

**(अहिले सम्म हामीले रबीका कुरा सुन्यौ - अब पालो कब्तेको कुरा सुन्ने! कब्तेको मनमा चै के छ त? सुनौ उसैको मुखबाट...)**

...

मलाई डर लाग्यो अनी म दौडेर घर पुगेँ। ममीले के भो भनेर सोध्नुभयो। मैले 'त्यो रबीले मलाई आइ लभ यु भन्यो' भनेँ - काँप्दै। भोलीपल्ट ममिले रबीलाई हँकार्नु भएछ। म भित्रबाट सुनिरा'थे। मनमनै 'खुच्चिङ' भनेँ। रबीको अनुहार हेर्न लायकको थियो त्यो बेला। ममीले "नडरा त्यस केटाले मज्नुगिरी उत्रिनेगरी मुखभरी गाली खाइसक्यो," भन्नुभयो भित्र आएर। मलाई ढुक्क भयो। हाम्रो घरको बाटो तर्केर स्कुल जान थालेछ अनी त।

क्लास फोर देखी क्लास टेनसम्म म नै फस्ट भएँ। ममीले क्लास एटमा छोरी फस्ट भा'को उपलक्ष्यमा रातो कुर्तासुरुवाल, सेतो सल किनिदिनु भयो। मैले त्यस्मा फोटो नि खिँचे। क्लास सिक्समा मेरो आँखा कम्जोर भएकोले चस्मा लाउन थालेँ - चस्मा लाउने ठुलो रहर पुरा भयो।

"के हो कब्ते फस्ट हुने तँ, खुशी हुने अरु" प्यारएन्टस् डे पछी रितुले जिस्क्याइ।

"के रे? को खुशी भयो?," मैले सोधेँ

"को रे? था न'भा जस्तो गर्छे चस्मिस्"

"साच्चै भन् न," मैले ढिपी गरेँ

"रबी हौ, तेरो फुरौलो," उस्ले मस्किदै भनी। "तेरो नाम स्टेजमा बोलाउना साथ रबी खुब स्वीइइ...

सिठ्ठी बजाउँछ, खुब ताली पड्काउँछ, एभ्री यर !"

मैले नपत्याउँदै ओठ लोप्र्याएँ। उस्ले फेरी भनी -" नपत्याए प्रतिज्ञालाई सोध "

"हो ब्यारे, हो," प्रतिज्ञाले रितुको सपोर्ट गरी। मैले पुलुक्क टाउको उठाएर अल्ली पर बसीरा'को रबीतिर हेरैँ। उस्ले हत्तनपत्त टाउको अर्कैतिर बटार्यो।

अक्टोबरमा रबीको बड्डे रे'छ। क्लास टिचरले 'ल आज रबीको जन्मदिनको उपलक्ष्यमा उस्ले चक्लेट बाँड्दैछ जम्मैलाई' भनेर सुनाउनुभयो। रबी चक्लेट बाढ्न थाल्यो डेस्क-डेस्कमा गएर। अरु जम्मैलाई दुई-दुई ओटा राख्दै हिंड्यो - मेरो डेस्कमा चार ओटा 'वाइट र्याबिट' चक्लेट छोडेर गयो। केटीहरुलाई के चाहियो - साउती मार्न थालीहाले, कुरै छैन ! मैले त देखेको छैन तर उस्को डेस्कमा रबीले 'R + K' लेखेको छ रे - श्रध्दाले सुनाकी। त्यस्तै एकपल्ट क्लास टेन पिकनिक जाने प्लान मनिटर राकेशले बनायो। जम्मैजनाले ५०-५० रुपैयाँ उठाएर दक्षिणकाली जाने कुरो भयो। मैले ममीलाई घरमा सुनाएँ। ममिले -"सर मिस पनि जान्छन् कि तिमीहरु मात्र?" सोध्नुभयो। सर मिस पनी जान्छन् भनेपछी बल्लतल्ल ३० रुपैयाँ दिनुभयो। मैले राकेशलाई पुरा पैसा छैन भनैँ। उस्ले 'केही छैन, बाँकी पछी देउ" भन्यो। तर मैले पछी थाहा पाएँ बाँकीको २० रुपैयाँ रबीले 'कब्तेलाई नभन है' भनेर रितुको हातमा देकोरे'छ। नजानिदो पाराले, अरुको आँखा छल्दै रबीले मलाई हेरेको मैले ख्याल गर्न थालेँ। म पनि अब त उस्ले मलाई हेरिरा'छ कि भनेर खुसुक्क हेर्न थालेँ छिनछिनमा। निकै बेर सम्म पनि हेरेन भने कस्तो कस्तो नरमाइलो पो लाग्न थाल्यो - किन नहेरेको होला ? उस्को 'हेर्ने रोग' अब मलाई पो सर्यो ! ऊ कुनै दिन स्कुल आएन भने पनि खल्लो लाग्न थाल्यो - तरकारीमा नुन नपुगेझैँ। शुक्रबार हाफछुट्टी नि नभए हुन्थ्यो जस्तो लाग्थ्यो।

एकपल्ट केटीपार्टीहरुको मिटिङ् भयो - प्रतिज्ञाको घरमा। प्रतिज्ञाको घरमा सत्तेनारनको पूजा ला'को थियो र जम्मै केटीहरुलाई बोलाकीथी प्रशाद खान। रबी पनि आ'को छ कि भनेर एताउता हेरैँ तर क्लासको केटाहरुमा राकेशलाई मात्र देखैँ। खैर जे होस्, हामी केटीहरु प्रतिज्ञाको कोठामा पस्यौँ। त्याँ धेरै त केटाहरुकै कुरा भए। कुरैकुरामा रबीको र मेरो कुरा निस्कियो। मलाई जम्मैले टिक्कखान दिएनन्। जम्मैले एकमुख लाएर भन्नथाले - "तँ र रबी किन नबोलेका?", "तँलाई त्यो फुरौलो मनपर्छ ?", "तँलाई त खुब हेर्छ बाइ तेस्ले", "मन नपर्ने भा तँलाई चै किन ४-४ ओटा चक्लेट?" आदी आदी। रितुले मलाई त्यो पिक्निकको २० रुपैयाको कुरा पनि त्यही सुनाई। मैले त्यो क्लास फाएभको कुरा बताएँ। त्यो कुरा सुने पछी जम्मै केटीहरु घोप्टो परेर लडीलडी हाँस्न पो थाले। बल्ल थाहा भो किन केटाहरुले रबीलाई 'फुरौलो' भनेको भन्दै निकैबेर हाँसे। म पनि तालमा ताल मिलाउदै हाँसिदिएँ। केटीहरुले त्यो

मिटिङ्बाट मेरो लागि एउटा फैसला सुनाए - 'भोली टिफिनमा कब्तेले रबीलाई सरी भन्नुपर्छ'। यो फैसला सर्वसम्मतीले पारीत भो। जम्मैले 'हो हो सरी भन्नै पर्छ' भनेर कोकोहोलो मच्चाए। अब भो त! 'ल ल' भन्नै पर्‍यो।

रातभर मेरो दिमागमा अनेक द्रिस्यहरु घुमें। कुनै द्रिस्यमा म अली नरम भएर 'रबी सरी ल प्लिज' भन्दै हुन्थेँ, कुनै द्रिस्यमा अली रुखो 'केटिहरुको करले मात्र भन्दैछु -सरी' भनेर ठम्ठम निस्कन्थे। फिलिम सुटिङ् गर्दाको जस्तो एक्सन-कट धेरै चल्यो मस्तिस्कमा। भोलीपल्ट रबी क्लासमै थियो टिफिनमा। भट्टाभट होम्वर्क सार्दै थियो। 'जा जा' भन्दै घचेट्न थाले केटीहरुले। बिस्तारै पाइला अघी बढाएँ। लाग्छ मेरो जुत्तामा बिस बिस किलोको फलामको ढक फिट गरिएकोछ - कस्तो भारी भा'को पाइला। उ घोप्टेर लेखिराथ्यो। मैले बिस्तारै 'सरी ल' भनेँ। उस्ले पुलुक्क हेर्यो र फेरी घोप्टियो। उस्ले पनि सरी भन्यो 'आइ हेट यु' भनेकोमा रे! म हाँसे। ऊ नि हाँस्यो। हामी दुबै हाँस्यौँ। बिचराले होम्वर्क सक्न पाएन। फेरी मुर्गा बन्यो त्यो दिन नि!

रितुले रबीको घरको फोन नम्बर दिई 'ब्लफ कल' हान्न कहिलेकाहीँ भनेर। मैले लुकी लुकी मिस कल दिन थालेँ। मेरोमा पनि दुइ रिङ् आउन थाल्यो। फोन न एता उठ्यो, न उता। तर फेरी एक्कासी खै किन हो फोन आउनै छोड्यो। मैले धेरै फोन गरेर रिसायो कि न! मैले सोचेँ-अब अटो बनाउनु पर्‍यो अनी रबीलाई पनि भर्न दिन्छु। पैला केटीहरुलाई भर्न दिएँ अनी केटाहरुले पनि भरीसके पछी रबीलाई दिएँ। उस्ले मेरो अटो ब्यागभित्र हालेर ओ. के. मात्र भन्यो। उस्लाई ढिला भर्न दिएँ भनेर न रिसायो कि - मलाई नरमाइलो लाग्यो! न मैले गर्दा मुर्गा बन्नु पर्‍यो भनेर रिसायो? आँफै देखी रिस उठ्यो। किन जान्ने भएर होम्वर्क गरिराको मान्छेलाई डिस्टर्ब गर्न गा'की होला? किन मिस कलका मिसकल दिएर हैरान पारेकी होला? किन उसैलाई चैँ लास्ट्मा अटो भर्न दे'की? सुरुमै किन नदेकी होला? किन? किन? जती सोच्यो त्यती रिस उठ्ने।

एकदिन टिफिनमा क्लासको एक कुनामा बसेर पढिरा'थे। नेपाली सरले भोली लक्ष्मी प्रशाद देबकोटाको 'के नेपाल सानो छ?' भन्ने पढेर आओ भन्नुभाथ्यो। त्यै पढ्दैथे। केटाहरुको ग्याङ् क्लासको अर्को कुनामा थिए। सेक्सन बि को कुल्दिप देसाइ मेरो ड्याडीको मिल्ने साथीको छोरा हो। ऊ इन्डियाबाट आ'को थियो, नेपाली खासै राम्रो थिएन। उस्को ड्याडिले 'कबिता बेटी, मेरो बेटालाई पनि नेपाली सिकाइदेउ है' भन्नुभाथ्यो। कहिलेकाहीँ सिकाइदिन्थे! तर आज आफ्नै पढ्नुपर्ने भा'कोले म क्लासमै थिएँ। केटाहरुले शायद नोटिस गरेनन्। उनिहरु एउटा कागज तानातान गर्दै पढ्दैथे। राकेशको स्वर सुनेँ। ऊ कागज हेर्दै चिच्याउँदै थियो - "वा क्या सायरी लेख्या छ रे यस्ले यो लेटरमा"। बिजय भन्दै थियो "यो

लगेर दिस् भने त सिओर पट्टिन्छे। जा लगेर दे सेक्सन बि मा।" जितेन भन्दै थियो -"तैँले आँफै लेखिस् यस्तो ? अरे वा लेटर प्याड नि खतरा रे'छ यार।" रबीले भन्यो -"हे मुलाहरु के र्याग गरिरा, ऊ मन्जितलाई दे त्यो लेटर, जे गर्छ अब उसैले गर्छ।" मन्जित रिसाँउदै क्लास बाहिर निस्कियो। जम्मै गलल हाँसे। मलाई लाग्यो पक्कै पनि कसैको लभलेटरको कुरा हुँदैछ त्याँ। फेरी एक्कासी चिसो पस्यो मुटुमा - 'कतै रबीले त सेक्सन बि को कसैलाई लेखेको हैन?' पछी हेड्सरले केटाहरुलाई अफिसमा बोलाए भनेको सुन्दा त झनै डरलाग्यो। के भयो होला हेड्सरको अफिसमा ? सेक्सन बि सँगको अन्ताक्षरीमा पनि रबी निकै खुशी देखिथ्यो। खुब मज्झी-मज्झी गीत भट्याइरा'थ्यो। हाम्रो सेक्सनले जित्दा पनि ऊ खुशी देखिएन। के उस्लाई हाम्रो सेक्सनले नजितोस भन्ने थियो ? त्यतिकैमा अनाहक मेरो मनबाट एउटा आवाज आयो - रबीलाई आफ्नो कुरा खुलस्त भनेर लेटर लेख् ! मैले संकल्प गरैँ - आजै लेख्छु, भरै नै लेख्छु अनी भोली नै दिन्छु !

५.

डियर रबी,

यो केटी त कस्ती रै'छ भन्लाउ तर हेरन मन थाम्नै सकिन त्यै भएर यो लेटर लेख्दैछु -तिमिलाई। एउटै गाँउ, एउटै स्कुल अनी एउटै क्लासमा पढ्छौ हामी त्यै पनि अपरिचित जस्तो छौँ है - तिमीलाई लाग्दैन त्यस्तो ? मैले कत्ती कोशीस गरैँ तिमीसँग बोल्न, अझै गर्छु तर खै किन किन सक्दै सक्दिन भन्या। त्यै भएर यो लेटर मार्फत आफ्ना मनका कुरा तिमीसँग खोल्दैछु, माइन्ड गर्दैनौ होला ! अब त स्कुल पनि सक्किन लाग्यो। मेरो ड्याडिले मलाई IT पढ्न बेङ्लोर पठाउने कुरा गर्दैहुनुन्छ तर मलाई साच्चै भन्नुपर्दा जानै मन छैन। तिमी जाँ पढ्छौ, जे पढ्छौ, त्यँही, त्यै पढ्न मन छ। एस. एल. सि. को भन्दा पनि बढी मलाई त स्कुल छोड्नुपर्ने डर छ। अनी त्यो भन्दा पनि बढी तिमीबाट टाढा हुनुपर्ने दिन आउला भन्ने डर छ।

तिमीले नयाँ बर्षमा पठाको पोस्कार्ड मैले जतनसाथ राखेकिछु, कहिलेकाहीँ सुटुक्क हेर्छु। आसा छ तिमीलाई पनि मैले पठाएको मनपर्‍यो होला। क्लासका केटीहरुले मलाई खुब जिस्काउँछन् तिम्रो नाम लिएर। रितुले तिम्रो घरको नम्बरदे'की थि। मैले थुप्रै मिसकल गरैँ भनेर रिसाएका त छैनौ नि ? रिसाका छौ भने सरी ल। मैले गर्दा तिम्रो होम्वर्क पनी सकिएन, त्यसको लागि पनि सरी। मेरो कारणले तिमीले अहिले सम्म खाली कि त गाली खानुपर्‍यो कि कस्ट सहनु पर्‍यो। तर साच्चै म माया देखाउन खोज्छु, भइदिन्छ उल्टो। के गर्नु माया लाउने फर्मुला नहुँदोरै'छ। फर्मुला हुने भए त घोकेर कन्ठ पार्नेथे।

तिमी हाँसेको मलाई एकदम मनपर्छ। तिमी बोलेको सुनीरहुँ जस्तो लाग्छ। आँट भएको भए -'तिमी हाँसेर बोली राख, म सुनी राख्छु नि ल' भन्ने थिएँ। अस्ती नै एकपल्ट धरानजाँदा बुढासुब्बा मन्दिरको बाँसमा तिम्रो नाम लेखेकीथेँ। भन्छन् आफुलाई मनपर्नेको नाम लेख्यो भने छिट्टै मिल्छ ! त्यस्तो भनाइको पछाडि कत्तीको सत्यता छ त्यो भविस्यले बताउला नै ! तिमीले पनि मलाई माया गर्छौ भन्ने गाइँगुइँ सुनेकोछु। तर फेरी सोच्छु - माया गर्ने भाको भए, तिमी त केटा मान्छे, भनीहाल्थ्यौ नि ! साथीहरुले त्यतिकै उडाएका हुन जस्तो लाग्छ। फेरी हामी बोल्दा पनी बोल्दैनौ। मलाई पो तिमीसँग बोल्दै नबोली माया बस्यो - तिमीलाई पनि मलाई जस्तै हुनुपर्छ भन्ने के ग्यारेन्टी छ र ? अरुले भनेको भरमा माया हुन्छ र ? जस्ले भन्नुपर्ने हो उसैले पो भन्नुपर्‍यो नि हैन र ? फेरी कोही नपाएर म जस्ती चस्मिसलाई के हेर्थ्यौ होला र जस्तो लाग्छ। मनका कुरा कसरी भनुँ, के गरी पोखुँ भएर साह्रै छट्पटी भयो। अनी आज यो कलमको साहाराले मुटुका कुरा यो कागजमा उतार्दैछु। हो म तिमीलाई मनपराउँछु, माया गर्छु ! मैले दिनसक्ने भनेकै त्यती हो। यदी तिमीलाई स्विकार्यछ भने प्लिज यो लेटरको जवाफ पठाउ है ! र यदी छैन भने पनि मलाई 'नादान कब्ते' ठानेर माफ गरिदेउ। अहिलेलाई यतीमै टुङ्ग्याउदैछु।

उही,

कबिता मैनाली

कक्ष्या १० A (रोल नं. १)

...

**१० बर्ष पछी...**

"हेलो !" रबीले फोन उठायो।

"हेलो मित्र ! मलाई चिन्यो ?"

"को हो ? मैले त चिनिन नि ! कस्लाई खोज्नु भा'को ?"

"रबी हैन यो ? आइ मिन 'फुरौलो'... हा हा हा" उताबाट बोल्नेले भन्यो। रबी झसँग भयो। 'फुरौलो' त उस्लाई उस्का स्कुलका दिनको साथीहरुले मात्र भन्थे।

"फुरौलो रे ? को हो भन्या ? कस्तो सस्पेन्स राखेको । भनन"

"म हौ म, मन्जित... साले बिर्सिस् साथीहरुलाई ?"

"ओ माइ गड" ठुलो स्वरमा रबीले चिच्यायो। "साले चट्याङ तँ ? काँ बाट? कसरी? काँ छस्? नेपालमै छस् ? भेट्न आ'म ? कुन ठाउँमा आ'म?" बरर एकै साසमा रबीले भनीसक्यो। उस्का आँखा चम्किला भए। अझै के के भन्न खोज्दै थियो मन्जितले बिचैमा रोक्यो र भयो -"पख पख धेर हतार नगर। म दुई दिन भो आ'को US बाट। याँ नेपाल आउनु अघी देखी नै मैले सबलाई कन्ट्याक्ट गरेकोथैँ। तेरो त घरको फोन पनि चेन्ज भएछ अनी ठाउँ पनि सेरेर कपनमा बस्छौ रे हैन ?"

"हो, अनी कसरी पत्तालाइस् त?," रबीले सोध्यो।

"साले तँलाई त म पानी मुनी भा'भे नि खोजेर निकाल्थे। खैर! तैँले लेखेको एउटा आर्टिकल अस्ती पत्रीकामा देखैँ। अनी त्यो पत्रीकामा फोन गरेरे बल्लबल्ल तेरो नम्बर पाएँ। कस्तो दुर्लभ प्राणी भाको यार तँ त ! " मन्जितले कुरा प्रस्ट्यायो।

"ए बा ! अनी को-कस्लाई फोन गरिस् त अरु ?," रबीले सोध्यो।

"अब पर्सी Saturday हाम्रो 'गेट टुगेदर' छ याँ बेकरी क्याफेमा। त्याँ आइज अनी सबसँग भेट हुन्छ।"

"ए ल ल यार ! म त एकदमै एक्साइटेड छु भेट्न," रबीले भन्यो।

फोन राख्नेबेलामा मन्जितले भन्यो - 'ए सुन् त फुरौलो, तलाइँ एउटा सर्प्राइज छ। Make that two.. तलाइँ दुईटा सप्राइज छ। पर्सी नै था पाउलास !," रबी के भन्न खोज्दैथियो मन्जितले फोन राखिसकेको थियो।

...

## ६.

रातीको तीन बज्न लाग्यो तै पनि आज रबीलाई निद्रा परेको छैन। उस्लाई भोली कैले होला र गेट टुगेदरमा जाँउ जस्तो लागिरा'छ। छिन-छिनमा आफ्नो मोबाइलमा समय हेर्दै बल्लबल्ल ६ बजायो। आफ्नो नित्यकर्म सकेर उस्ले मन्जितलाई फोन गर्छ - "हेलो चट्याङ, के छ यार ?"

"ठिकै छ," उताबाट मन्जितले भन्छ। "भर्खर ७:३० भएछ, किन फोन गरिस् यार ? म त ओछ्यानमै छु"

"ए सरी यार ! भरे कती बजे आउने हो भनेर सोध्न गरेको ।"

"त्यै ५:३०-६ तिर आइज न ! कती हतार हो केटोलाई !"

"एत्रो बर्षपछी भेट्दैछु, म त एकदम एक्साइटेड छु यार ! ल ल तँ सुत । भरे भेटुँला ।"

दुबैले फोन राख्छन् । फोन राखेपछी रबी टोलाउँदै बिगतमा पुग्छ । स्कुल, टिचर, साथीहरु, क्यान्टिन, पिक्निक, क्लास अनी कब्ते उस्को मस्तिस्कमा नाच्न थाल्छन् ।

...

मोटरसाइकल पार्क गरेर रबी रेस्टुराँमा छिर्नमात्र लागेको हुन्छ - पछाडीबाट कसैले उस्लाई गम्लङ्ग अङ्गालो हालेर बुई चड्छ । "ओ फुरौलो, तँ आईपुगिस !," पछाडी मन्जित हुन्छ ।

"ओ हो ! चट्याङ ! हेर्त यो कस्तो ज्याङ्गो भएछ !" रबी हर्सित हुँदै ठुलो स्वरमा भन्छ ।

"अनी के त साले ! जैले तँ जस्तो फुरौलो हुने त ? हा हा हा !"

"के छ यार, कत्ती पछी देख्दैछु ! मलाई त विश्वाश गर्नै गाह्रो भै'राछ!" रबीले अङ्गालो मार्दै भन्छ !

"I am very good मित्र ! ल भित्र हिँड ५-७ जना आइसके, अरु आँउदैछन्।"

"ल हिँड"

भित्र पस्नासाथ एउटै स्वरमा जम्मैले हुटिङ् गर्छन् - "फुरौलो, फुरौलो, फुरौलो।"

त्याँ राकेश हुन्छ । बिनोद हुन्छ । प्रसुन हुन्छ। बिजय हुन्छ। राज हुन्छ। माल्स्मा । प्रतिज्ञा । श्रध्दा । जम्मैजना पालैसँग उठेर अङ्गालो मार्छन् । जम्मै भावुक । जम्मै खुशी । कस्तो रमाइलो ! राकेशले बियर मगाँउछ । बियर र म:म: खाँदै जम्मैले आ-आफ्नो कुरो बताउन थाल्छन् । राकेशलाई लागिसकेजस्तो देखिन्थ्यो । उस्को बोली लर्बराउन थालीसकेका थिए । राकेश सिङ्गापुरको बैँकमा काम गर्दैछ रे । बिनोद फिजिक्समा पिएचडी गर्दैछ रे - जापानमा । प्रसुन टेक्ससमा IT मा मास्टर्स गर्दैछ रे । मन्जित US मा बायोमेडिसिन पढ्दैछ रे । बिजय पनि US मा एमबिए गर्दै छ रे । माल्स्माले पब्लिक हेल्थमा काम गर्छिन् रे US मा । प्रतिज्ञा र श्रध्दा सँगै तिलगंगामा नर्स छन् रे । राजले त बिहे नि गरीसकेर पोखरामा रेस्टुराँ खोलेर बसेकोछ रे । रबीले पनि आफु नेपाली टिचर भएर पढाउन थालेको बताउँछ । एकछिन पछी रितु आइपुग्छे । उस्को पछीपछी जितेन र गोपाल पनि आइपुग्छन् । रितुको पनि बिहे

भइसकेको रहेछ। ऊ अहिले 'शान्ती मन्त्रालय' मा काम गर्छे रे।

"अनी अमेरिकामा त साह्रै बिजी हुन्छन् रे मान्छे - कसरी तिमीहरु जम्मैको एक्कैपल्ट मिल्यो नेपाल आउन ?," प्रतिज्ञाले सबैलाई एकमुस्ट सोधिन्।

"यो सब मिलाएको यो चठ्याङले हो ," राकेशले लर्बराउँदै भन्यो। "एक बर्ष अघी देखी किचकिच गरेर बल्लबल्ल बिदा मिलाएर आको नि हामी।"

जम्मै जना हात हातमा बियर वाइन लिएर २-३ जनाको ग्रुप ग्रुपमा उभिएर कुरा गर्न थाले। मन्जित, राकेश र रबीको एउटा ग्रुप बन्यो।

"अनी के सर्पाइज् भन्थिस् नि चठ्याङ ? खै त के हो ?" रबीले मन्जितको पिठ्युँमा ढ्याप्पा हान्दै सोध्छ।

"ए म भन्दिउँ ?" राकेश बिचमा बोल्छ।

"साले एस्लाई लागि सक्यो," मन्जितले राकेशलाई हेर्दै भन्छ। "ल भन् भन् तैँ भन्।"

"यो चठ्याङ को छ नि, को सँग लभ परेको छ तलाई था छ ?," ठुल्ठुला आँखा पार्दै रबीलाई सोध्छ।

"को सँग ?"

"गेस् गर न गेस्।"

"को करिना कपुर हो ?" रबीले हाँस्दै भन्छ

"हैन साले संगीतासँग, संगीते, क्लास टेन बि "

रबीका आँखापनी ठुला हुन्छन्। "त्यो लभलेटर हेड्सरलाई देखाइदिने वाली संगिता ?" उस्ले अच्चम्म मान्दै सोध्छ।

मन्जितले टाउको हल्लाउँदै 'एस' भन्छ - मन्द मुस्कानका साथ। रबीको आँखामा प्रश्नवाचक चिन्ह देखेर मन्जितले भन्छ -"अमेरिकामा एउटै युनिभर्सिटीमा पुगेछौँ, खै कसरी कसरी ? अनी त त्यही पर्‍यो यार। उस्को चै थेसिस बाँकी छ, सो आउन मिलेन।"

"ल बधाई छ यार। झापड पनि खाइस्, पापड पनि खाइस् उसो भे संगीताको लागि। हा हा हा!"

रबीले गिज्यायो। तिनैजना गललल हासें।

"तँ जस्तो फुल देखी डराउने भवराँ हो र म फुरौलो ?" मन्जितले रबीलाई जिस्क्याउँछ।

"भन भन ! अनी अर्को सर्पाइज् चै?" रबीले सोध्छ। फेरी राकेश बिचमा बोल्छ -"एउटा कुरा भन्छु है केटाहरु आज सुटुक्क।"

"के हो भन न, तँ त मनिटर परिस् -तेरो कुरा सुन्नै पऱ्यो नि," मन्जितले भन्छ।

मातेको स्वरमा राकेशले भन्छ -"हेर रबी त्यो कब्तेलाई मैले पनि मन चै पराको हुँ यार। हुन त म सब केटीहरुसँग जिस्कन्थे तै भएर कब्तेले मलाई 'लाइटली' लि बुझीस् केटा हो। साह्रै मन पर्थी - डन्ट माइन्ड है रबी," रबी र मन्जित एकछिन जिल्ल परे। एकछिन पछी रबीले फेरी सोध्यो - "के हो अर्को सर्पाइज्, भन न चट्याङ।"

"उ त्याँ हेर," मन्जितले ढोकातिर देखाउँदै भन्छ।

"कब्ते!" हठात रबीको मुखबाट फुत्किन्छ। जम्मैजना रबीतिर हेर्दै हाँस्छन्। कब्तेको पक्कै पनि मनपर्ने रङ्ग रातो हुनुपर्छ। आज पनि ऊ त्यो अटोको फोटोमा जस्तै रातो कुर्थासुरुवालमा थिई। रबी उस्लाई एकनास हेरेको हेरै हुन्छ - कस्ती राम्री ! कस्ती उज्याली ! कबितालाई सबैले न्यानो स्वागत गर्छन्। केटीहरुको आँखा रसाउँछन्। पालैपालो जम्मैसँग भेट्दैहुन्छे ऊ। रबी फेरी बिगतमा पुग्छ !

"हेलो रबी "

"हाइ कबिता"

"तिमी त उस्तै पो देख्छु नि रबी ?"

"म बद्लेको छैन," रबीले मन्द मुस्कान छोड्दै भन्छ। "तिमी चैँ चेन्ज भएछौ, खै चस्मा ?"

"ए, आज्कल कन्ट्याक् लाँउछु " उस्ले भनी। "ए बाइ द वे... उ चै मेरो 'फ्योन्से'" उसँगै उभिएको मान्छेलाई परिचय गराउँदै भनी।

"हाइ म रबीन्द्र। तिमी चैँ रबी होला हैन ? कबिताले सुनाइरा'हुन्छिन् 'मेरो स्कुलको साथीको नाम पनि रबी हो' भनेर। खुशी लाग्यो भेटे र।"

रबीले हात मिलाउँदै "हाइ नाइस टु मिट यु" भन्छ। रबीन्द्र चाडै घुलमिल हुनेखाल्को मान्छे रै'छ। जम्मैजनासँग आँफै परिचय गर्दै हिड्दैथ्यो। मन्जित मातिसकेको राकेशलाई सम्हाल्दै एउटा कुनामा बसाउन लिएर जान्छ। रबी र कबिता मात्र बाँकी हुन्छन् अब त्यो ग्रुपमा। एकछिन् दुबै मौन बस्छन्। सायद दुबैलाई अफ्टेरो लागेको हुनुपर्छ।

"अक्वार्ड त भा'को छैन नि तिमीलाई," रबीले मौनता भङ्ग गर्दै सोध्छ।

"अली अली" कबिताले वाइनको गिलासभित्र हेर्दै बिस्तारै भन्छे। "तिमिलाई?"

"मलाई नि अली अली," रबीले उस्लाई हेर्दै भन्छ। "अनी काँ थियौ ? काँ छौ त आजकल?"

"म बेङ्लोरमा थिएँ। पढाई सकेर काम गर्नथालेँ। अनी अब कामबाट क्यानाडा ट्रान्स्फर हुँदैछ। हामी दुबैजना एउटै कम्पनीमा छौँ। अर्को महिनाको फ्लाइट छ।" कबिताले भनी। "अनी तिमी चैँ?"

"मेरो पनि पढाई सकियो। अहिले सानोतिनो टिचर छु। नेपाली पढाउँछु। एउटा लोकल पत्रीकाको स्तम्भकार पनि छु। राम्रै चलीरा'छ।" रबीले आफ्ना कुरा सुनायो।

"को को काँ काँ पुगियो है साथीहरु ?," कबिताले रबीलाई हेर्दै भनी।

रबीले भन्यो - "त्यै त ! जे होस् आज जम्मैलाई भेट्न पाइयो, खुशी लागिरा'छ।"

"अँ है ! मलाई नि मन्जितले फोन गरेर भन्यो," कबिताले अली सहज हुँदैँ भनी। "तिमिलाई स्कुलको दिनहरु कत्तीको याद आउँछ त रबी ?"

"आँउछ नि याद। अझ म त टिचर भा'छु - स्कुलका केटाकेटीहरुलाई हेरेर आफ्ना दिनहरु कत्ती सम्झन्छु कत्ती।"

"माइन्ड गर्दैनौ भने एउटा कुरा सोधुँ ?," मासिनो मुस्कानमा कबिताले सोधी।

"के हो भनन, किन माइन्ड गर्नु ?," रबीले पनि हाँस्तै जवाफ फर्काउँछ।

"क्लासमा चलेको हल्ला, हल्लै मात्र थियो कि साच्चै?," कबिताले अनकनाउदै सोध्छे।

"साच्चै नभाको भए तिमीलाई लेटर किन लेख्थे?," रबीले हाँस्तै भन्छ। "लेटरको जवाफ नदिने तिमी त हौ नि !"

"तिम्रो लेटर?," कबिता झसङ्ग हुन्छे। "कुन लेटर ? कस्तो लेटर ? बरु तिमीले चैँ दिएनौ, मेरो लेटरको रिप्लाइ !"

"तिम्रो कुन लेटर ?," रबी रातो हुन्छ।

"तिम्रो कुन लेटर ?," कबिता निली हुन्छे। "तिमिले कहिले लेख्यौ ?"

"त्यो तिमीले अटो भर्न देको बेलातिर लेखेको थिएँ। राकेसले 'दिएँ' भन्थ्यो त !" रबी अधैर्य हुँदै सोध्छ।

"ओ एम जि, " कबिता आफ्ना गालामा दुबै हात राख्दै चकित हुन्छे। उस्को हातको माइली औंलामा सुनको औंठी टल्कन्छ। "मैले पनि उसैलाई दे'को थिएँ 'दिएँ' भन्थ्यो।"

रबी र कबिता दुवै मौन भए। सायद 'अक्कार्ड ' यसैलाई भन्छन्। दुवैले एकअर्कालाई हेरीरहे - निकैबेर। दुवैलाई मनमा लाग्यो - "यदी त्यो चिठ्ठी उस्ले पा'को भए ?"

रबीलाई राकेशसँग खुब रिस उठ्यो। कबिताका आँखामा पनि क्रोध स्पस्ट देखिन्थ्यो तर अब रिसाएर हुनेवाला केही थिएन। आफ्ना मनमा एकअर्का प्रती गुम्सिएका तरङ्गहरु खुलस्त रुपमा फुकाउन नसक्नु मुलत: रबी र कबिताको नै गल्ती थियो। हिमाल आरोहण गर्छु भन्नेले पहिलो पाइला त फेदीमा नै हाल्नुपर्छ। अब अफ्सोच गरेर बितेका पललाई सपार्न मिल्दैन - जिन्दगी न 'रिवाइन्ड ' हुँदोरै'छ न 'फास्ट'। यो त आफ्नै तालमा 'प्ले' हुने कुरो हो। 'भावीको लेखा' लाई दोष दिनु सिवाय उपाए नै के थियो र अब ? समय उनिहरु भन्दा धेरै अगाडि गै'सकेको थियो बस अब त बिगतको मिठो स्मृतिहरु बाँकी भए। रबी र कबिताको चिनो अब क्लास टेनको डेस्कमा R+K मै सिमित हुनेछ। कबिताले बुढासुब्बाको बाँसमा 'रबी' लेखेकीथी। उस्ले आफ्नो 'रबी' पाइसकीथि।

निकै अबेर भै'सकेको थियो। जम्मैजनाले एकअर्काको फोन, इमेल साटासाट गरे र फेरी भेट्ने बाचाका साथ बिदा भए। राकेश मातेर झल्लु भाथ्यो। ट्याक्सीमा चढाएर मन्जितले आफ्नो घर लग्यो। जानेबेलामा रबीन्द्रले रबीलाई -"It was nice to meet you" भन्यो र बिदा माग्यो। कबिता अघीनै गाडीमा चढिसकेकीरै'छ - रबीसँग कुरा भएन।

...

भोलीपल्ट रबी पढाउन स्कुल गयो।

जम्मै विद्यार्थीले लयबद्द "गूड् मर्निङ सरssss" भन्दै उठे ऊ क्लास छिर्नासाथ।

आरम्भ

"गूड् मर्निङ, सिट् डाउन," भन्यो रबीले। "ल आज हामी लेखनाथ पौड्यालको कविता पढ्दैछौँ।"

...

क्लास सकिएपछी ऊ बाहिर निस्कियो। उस्को पछाडि ३-४ जना केटीहरु 'रबी सर, रबी सर' भन्दै आए। रबीले "के भो?" सोध्यो।

"सर यो बिस्नेले सब्तेलाई दे'को," ति मध्ये एउटी केटीले ऊ तिर कागज तेर्स्याउँदै भनी।

"के हो यो?," रबीले सोध्यो।

"सर त्यो बिस्नेले के के लेखेको छ यो कागजमा मलाई। कम्लेलाई दिन ला'को रै'छ तेस्ले" अर्कीले बोली।

"हो सर, मलाई 'यो लगेर सब्तेलाई दे' भन्यो तेस्ले"

"ल ठीक छ, म हेर्छु। बिष्नुलाई टिफिनमा मलाई भेट भन्द्याओ।" रबीले कागज गोजीमा हाल्दै भन्यो।

...

"सरले मलाई बोलाउनु भा'को हो?," बिष्नु लुरुक्क पर्दै ढोकामा उभिन्छ।

"हो, के यो तैले लेखेको हो?" रबीले सोध्छ। बिस्नु चुपचाप, राता कान पारेर भुइँतिर हेर्छ, बोल्दैन।

"कस्ले सिकायो एस्तो लेख्न? भर्खर सातमा पुग्यौ, यस्तो लेख्नेबेला भइसक्यो?," बिष्नु चुप्चाप!

"खै एता आइज," रबीले बोलाउँछ। बिस्तारै डराइ-डराइ बिष्नु अगाडि बढ्छ।

“मैले तँलाई पिट्न बोलाको हैन,” बिस्नुको हातमा कागज थमाउदैँ रबीले भन्छ। “ला यो पक्डी - एस्मा धेरै ह्रस्व-दिर्ग मिलेका छैनन्। यो सच्याएर क्लास टेनमा पुगेपछी दिनु, बुझीस्?"

बिष्नुको अनुहार एकाएक खुल्छ। उस्ले 'हुन्छ' को टाउको हल्लाउँछ अनी कागज गोजीमा हालेर निस्कन्छ।

"ए सुन् त," रबीले अली पर पुगिसकेको बिष्नुलाई बोलाउँछ। बिष्नु पछाडि फर्कन्छ.....

"आफैँ लगेर दिने, अरुको हातमा पठाउने हैन..." ।

# छोरी

सुमन - हरेक दिन जस्तो आज बिहान म कोटेश्वरदेखी लगनखेल कुमारिपाटी जाने ट्याम्फु चढैं। सात बजे कलेज पुग्नु पर्ने आज अली ढिला उठियो। नरमाईलो लागिरा'थ्यो। निद्रामा कती खेर अलार्म बन्द गरेर फेरी सुतेछु, पत्तो भएन। ट्याम्फुको झर्को लाग्दो पट पट पट, ट्याक् ट्याक् ... 'बाल्कुमारी, ग्वार्को, सातदोबाटो, लगनखेल, लगनखेल...ल हिंड्यो, हिंड्यो...एsss दाई यता यता, सिट खाली, सिट खाली...,' खलासी घोक्रो फुट्नेगरी साउने भ्यागुताको जस्तै ट्वार् ट्वार् कराइराको हुन्छ, सधैँ जस्तो।

त्यतिकैमा एक जना मिन पचासकी जस्ती देखिने आईमाईले "एsss भाई! यो पाटन होस्पिटल जान्छ?," खलासीलाई सोधिन्। मनमनै सोचैँ 'म भन्दा एक स्टप अगाडि ओर्लिने रै'छिन् यि।'

"ए ल बस्नुस् म तपाईंलाई होस्पिटल भित्रै पुर्याइ दिन्छु," खलासिले जवाफ फर्कायो।

उस्को कामै प्यासेन्जर बोलाउने, जती मान्छे खाँदे पनि 'सिट खाली, सिट खाली' भन्नु न हो। एकफेर हप्काउन त मन थियो 'छिटो हिँड' भनेर तर चुपै लागैँ। एकजना ट्राफिक सिठ्ठी बजाउदैं ट्याम्फुतिर आउँदै गरेको देखेर हो कि के हो, ड्राइभरले 'ल भाई जाम' भनेर हुइँकायो। म ढोकाकै छेउमा बसैँ र ति आईमाई मेरो ठ्याकै सामुन्नेमा।

लामो सलक्क परेको कपाल, भर्खर नुहाएर कपाल स्ट्रेट गरेको जस्तो, २-४ दिन अगाडि रातो पनि लाएको हुनुपर्छ। ओठमा कलेजी लिप्स्टिक, गाला पनि हृष्ट-पुष्ट, मोटो तिलहरी - छड्के पारेर लाएको, कानमा टुप्लुक्क टुप्लुक्क दुइटा मोतीको डल्लो जस्तो - मोती नै त होला, लाएको। सफा, भर्खर गोद्रेजबाट निकालेर लाएको जस्तो फुल्बुट्टे साडी, साडिको कलरसँग मिल्ने चुरा, गुलाबी चोलो, सिको घडी। लाग्छ ति कुनै खान्दानी घरकी गृहणी हुन र कुनै भोजमा जाँदै छिन्। अली 'मोडर्न मम्मी' रहिछिन् जस्तो लाग्यो मन मन। एकछिन् आफ्नै 'चाउरी आमा' लाई 'यस्तो लवाइ-खुवाइमा कस्तो देखिदो होला' सम्झेर सानो खित्का फुस्कियो मेरो मुखमा, फुस्स।

नचाहँदा नचाहँदै पनि सबै यात्रुहरुलाई मोडर्न मम्मीले आफुमा केन्द्रित गरेकीछिन्। मान्छेहरुको एकोहोरो ट्वाल्ल हेराइ बाट बुझिन्छ कि सबैको मनमा पक्कै पनि केही न केही कुरा खेली रहेको छ। खलासी फेरी करायो 'ग्वार्को, सातदोबाटो, लगनखेल, लगनखेल।'

ट्याम्फु ग्वार्कोमा पुग्यो, दुइजना ओर्लिए। त्यतिकैमा फोनको घन्टी बज्छ, सबैको ध्यान फेरी तिनै मोडर्न मम्मी तिर तानिन्छ। उनले आफ्नो हाते पर्सबाट हत्त-नपत्त फोन निकलिन र देब्रे हातले फोन उठाउँदै भनिन्:

" हलो हलो ..

.

अँ अँ भन् ... सुन्दैछु...सुन्दैछु,

.

म ट्याम्फुमा छु नि, ड्याडी बिहानै कता लाग्नु भयो, अनी यै ट्याम्फु भा'नि चढेर आउँदै छु

.

अनी देखायौ त डाक्टरलाई ?

.

फेरी देखाउनु पर्छ भनेको हैन ?

.

ए ए उसो भा देखाको ? के रे'छ था भो ?

.

अँ अँ

.

हँ ?

.

के भन्छ ? अल्ट्रा साउण्डमा देखाको रे ?

.

ए त्यै म त के भन्छ ... ए उसो भा छोरी ?

.

छोरो हुनु पर्ने त पुरेतबाले भने अनुसार ? सबै बिधी पनि पुर्याकै हो...

.

ए लौ उसो भा, ठिकै छ, पहिलो बच्चा, जे भये नि के भो र

.

तलाई नि छोरी मन पर्ने, अब के गर्नु बदल्न नमिल्ने ।

.

लौ लौ जेठिकीले पनि छोरो जन्माउन सकिन... अब तेरो पनि...

.

ल ल राखेँ ।”

……

अघीसम्म काँक्रोको चिरा जस्ती रसिली देखिने ति मोडर्न मम्मी, अहिले अस्ताउन लागेको घाम जस्ती रातो भइन् ।

“ ल पाटन होस्पिटल आयो,” खलासी चिच्चयायो । “ एsss जाउलाखेल, पुल्चोक, कुपण्डोल, माइतिघर, ल गयो गयो.....”

म कुमारीपाटिमा उत्रिएँ । ट्याम्फु धुँवा छोड्दै दौडियो । मोडर्न मम्मी ट्याम्फुबाट ओर्लिनन् । घोसे मुन्टो लाएर फोन खेलाउँदै ट्याम्फुको रफ्तार सँगै धुवाँमा बिलाउँदै गइन् ।

# इन्स्पेक्टर्नीको डायरी

*२०६६ पौष ७ - रातको करीब ११:३०*

“ नाम ?”

“ लीला कुमारी नगरकोटि ”

“ मृतकको नाम ?”

“ भुवनराज पुडासैनि ”

“ मृतक सँगको नाता ? ”

“ मेरो लोग्ने थियो ”

“कसैमाथी संका ? ”

“ छैन, म नै हुँ। सजाय भोग्न तयार छु इनिस्पेक्टरनी साहेब।”

उस्का आँखामा भिन्नै तेज थियो। निडर देखिन्थे ति। सुख्खा तर घमण्डले भरिएका।

होमिसाइड् केसहरु आइरहन्छन्। कती छिट्टै सल्टिन्छन् त कतीमा अनुसन्धान चली रहेका छन्। कती केस बन्द पनि भए। बन्द भएका केसहरुमा प्राय हत्याराको बयान रोक्न आदेश मन्त्री, प्रधानमन्त्रीबाट आउने गर्छन्। दण्डहीनतालाई प्रसय दिने खेल माथिबाटै हुन्छ। लुटी ल्याँउ, भुटी खाउको परम्परा चुलिएको अवस्था छ। बाबुराम, रामबाबु, दुष्टकमल, झले, झुसिले... जम्मै उही ड्याङ्-का मुला हुन्। जुनै जोगी आए पनि कानै चिरेका। यो अहिले आएको केसमा हत्याराको पहिचान भइसकेको थियो। हत्याकी अभियुक्त लीलाकुमारीले आफूले हत्या गरेको भनी साविति बयान दिईसकेकी छन्। अभियुक्ता स्वयंले फोन गरेर 'म बाट हत्या भएको छ, लिन आउनुहोस्,' भनेकीथी। म दुई जना हवल्दार भाईलाई लिएर घटना-स्थल पुगेँ।

घटना-स्थल, एउटा व्यवस्थित कोठा! कोठामा भएका टेबल, कुर्सी, तन्ना, खाट, आल्ना, रेडियो आदी

सबै व्यवस्थित देखिन्थ्यो। सोफामा सेता चकटी ओछ्याइएका थिए। भर्खरै कसैको हत्या भएको छ भनेर भन्नै नमिल्ने गरी अजिबले सजिएको थियो त्यो कोठा। भित्तामा काली माताको अजङ्गको फोटो टासिएको थियो। महादेव कालीको पैतालाले थिचिएका। कोठा जत्तिकै सजिएर बसेकीथी अभियुक्त लीला। लासलाई ओछ्यानमा सुताएर राखेकी रै'छ। टाउकोमा सिरानी अनी सिरक ओढेर मस्त सुतेजस्तो देखिन्थ्यो। नजिकै गएर हेरेँ। निश्वास, निर्जिब, निलो प्राणी!

“लासलाई पोष्ट्मार्टमको लागि टिचिङ् हस्पिटल लाने ब्यबस्ता मिलाउनोस्,” मैले हवल्दारलाई भनेँ। “उ, उस्लाई लगेर थुनामा राख्नोस्! छुट्टै राख्नु, अरुसँग नमिसाइ। उ माथि कडा निगरानी राख्नुहोला। उ सुसाइड वाचमा छे अब! सो बि केयरफुल। म भोली बिहान आएर थप बयान लिन्छु।”

“हुन्छ सा'ब,” हवल्दारले भनें। “ त्यस्को चिन्ता लिनुपर्दैन तपाईंले। बरु मृतकको गोजीबाट एउटा चिठ्ठी बरामद भएको छ,” म तिर चिट्ठी दिदैँ भने।

मैले चिठ्ठी गोजीमा हालेँ र त्यहाँबाट निस्किएँ। घर पुगेर चिठ्ठी गोजीबाट निकालेँ र पढ्न थालेँ।

...

भुवन,

तिमीलाई अरुभन्दा अल्ली फरक देखेँ। प्रायले बाहिरी बनावट हेर्छन्। लाग्यो तिमीले म भित्रको मनलाई हेर्यौ। कसैसँग, मेरा मिल्ने केटीसाथीहरुसँग पनि नगरेका कुराहरु मैले तिमीसँग बाँडे। मरी जाउँ, म तिमीसँग जती उदाङ्ग कसैसँग पनि भएकी छैन आजको दिनसम्म पनि। 'हाम्रा कुरा हामीसङ्गै रहन्छन्,' मलाई आश्वासन दियौ। अझ मेरो टाउकोमा हात राखेर 'तिम्रो कसम,' बाचा गर्यौ। याद छ? तिमीले मलाई यो संसारकै सबैभन्दा राम्री बनायौ - बातले। चन्द्रमा, पहाड, झरना, नदी, सागर, तारा, फुल,.... सब्बै मेरा अगाडि फिक्का बनाइदियौ - बातले। मेरोलागी 'प्रचण्ड गर्मीमा सितल छाहारी', 'आँधी-हुरी रोक्ने अटल पहाड', 'पुष-माघको जाडोमा न्यानो राप'... बन्यौ - बातले। उज्वल भविस्यको सुन्दर सपना, हामी दुई र हाम्रो सन्तान सुख देखायौ - बातले। तर तिमीले बात अनुसारको बर्ताव देखाएनौ, अहँ। मैले त तिमीलाई आचरणको आचार्य सम्झेँकी थिएँ तर तिमी त बातको बाद्साह मात्र निस्कियौ। आज मेरो शरीरको कोष-कोषले तिमीलाई घ्रिणा गर्छ। वाध्य तिमीले नै बनाएका हौ।

मैले माथि तिमीलाई 'भुवन' भनेर यो पत्र सुरु गरेँ। किनकि मेरा लागि तिम्रो नामको अगाडि कुनै

बिशेषण सुहाँउदैनन् । बिशेषणको लागि त बिशेष हुनुपर्‍यो, जुन तिमी अब रहेनौ । बाँकी रहेकाछन् त केवल तिम्रो यादका रहलपहल अवसेशहरु र तिनलाई पनि रगड्दैछु । एकदिन अवस्य मेटिनेछन् । झुसिलकिराले पात छियाछीया पारे झैं तिमीले मेरो मनमा सानासाना र धेरै छेद पार्न खोज्यौ । तर तिमीले यती कुरा बुझ कि म पात हैन । म त सिङ्गो रुख हुँ । हाँगाबिगाँ भएर फैलिदै गरेको रुख । दुईचार वटा पात रुखबाट खसे त के भो ? फेरी नयाँ पलाउनेछन्, पलाउँदैछन् ।

'घरेलु कामदार' भएर यो मरभुमी देशमा अर्काको नानीको गु-मुत सोरेर बसेकी छु । एकै दिन, एकै छिन फुर्सद मिल्दैन । तिनै छाक खान मिल्ने त केवल हेला र हप्काइ मात्र हो । नेपालबाट आएर यो घरमा छिरेदेखी, आज २ बर्ष भयो, घरबाट एक पाइला निकाल्न पाएकी छैन । चाहेको भए तिमी आँफै पनि विदेशिन सक्थ्यौ । तर हैन, तिमीले मलाई पठाउन कसरत गर्यौ । भन्यौ - 'केटी मान्छेलाई भिसा सजिलै मिल्छ । मैले यो सब हाम्रै भविस्यको लागि गर्दैछु ।' बल्ल आज आएर बुझ्दैछु तिमीले हाम्रो हैन केवल आफ्नो लागी यो सब गरेका रहेछौ । केवल आफ्नो भविस्यको लागि । मुखले 'हाम्रो' भनेर ठीक्क पारे पनि तिम्रो कालो मनमा केवल 'म' र 'मेरो' भाव मात्र रहेछ । तिम्रा लागि त म कमाइ खाने भाँडो बनेकी रहेछु, बल्ल चेत हुँदैछ ।

३० बर्ष भन्दा माथिका महिलाहरुले मात्र वैदेशिक रोगजारमा घरेलु कामदार भएर जान पाउने हदबन्दी नियम नेपाल सरकारले लगाएको थियो । तिमीले वैदेशिक रोजगार बिभागबाट कम्पनीमा काम गर्न जाने स्वीकृति लियौ र खाडी मुलुकमा घरेलु कामको लागि भित्री चाजोबाँजो मिलायौ । तिमीलाई जसरी हुन्छ मलाई पन्छाउनु रहेछ, सफल भयौ । गर्भमा हुर्किदैँ गरेको पाँच महिनाको नानीलाई समेत तिमीले बाँकी राखेनौ । अनेक ताना बुनेर मलाई गर्भपात गराउन बाध्य बनायौँ । त्यस्तो कठोर निर्णय लिएकोमा म आजसम्म पनि आफुलाई माफ दिन सक्दिन । माफि दिन लायकको काम हैन भ्रुणहत्या । आफ्नो बच्चा गिराएर अर्काको बच्चा हेर्न आ'की म ! बोकाको मुखमा कुभिन्डो नअँटेको, शायद तिमीजस्तै लाई भन्छन् । थुइक्क, म जानु अघी गोही आँसु झार्यौं है ? ढोङ्गी ।

मेरी सानीमाकी छोरी पम्फाले मलाई सब बताइ सकिन्। तिनी पनि अस्ती भर्खर साउदी आई पुगिन्। कसरी-कसरी मेरो ठेगाना पत्ता लाइछिन् र मलाई भेट्न भनेर एकजना अर्की साथीसँग आइन् । तिमीले बनेपामा अर्की राँड पालेर राखेको कुरो उस्ले रुँदै भनी । जाँड, रक्सी, तास-जुवा र रण्डीबाजी तिम्रो दिनचर्या बनेको छ रे । अरु त अरु मेरो बारेमा पनि नचाहिँदा हल्लाबाजी गर्दै हिँड्छौ भन्ने सुनेँ । 'त्यो साउदीको अर्कै जार आमिनसँग सल्केकीछे,' 'सुको दाम पठाउदिन,' 'त्यो भालु हो भालु,' भन्दै मलाई

दुनियाँको अगाडि सराप्ने गर्छौ रे। मान्छे यतीसम्म पनि गिर्न, निच हुन सक्दो रहेछ। पम्फाले आउने बेलामा 'बा-आमा भेटेर आ'की दिदी' भनेर सुनाइ। मेरा बा-आमाबाट मेरो फोन नम्बर र मेरो यताको ठेगाना तिमीले गोप्य राखेको कुरो उस्ले बताइ। बा-आमाले मलाई लेखेका चिठ्ठीहरु तिमिले लुकाएर आँफै लेख्ने गरेको कुरो आज चाल पाउँदैछु। म चाँही यहाँ बा-आमाको खुशी र आशिर्वाद पाएको भ्रममा सारा दु:ख बिर्सन्थैँ। आफुलाई भाग्यमानी ठान्थैँ। मेरो माईतमा पनि फोन लाइन राखीदेउ भनेर लाखौं आग्रह गरें तिमीलाई। अर्को हप्ता, अर्को महिना भनेर कुरा चपाउँदै गयौ। मैले यहाँबाट पठाएको मोबाइल पनि त्यै राँडलाई बुझायौ होला हैन? तिमीले मेरो बारेमा गरेका वाहियात कुराहरु मेरा बा-आमाले कसरी सुन्न सक्नुहुन्छ होला? मेरो बारेमा जे भने पनि मेरो बा-आमालाई तिमीले दिएको कष्टको लागि भगवान नै आएर 'माफ गर्दे' भने पनि म कुनै हालतमा गर्ने छैन। तिमी त मान्छेको भेसमा राक्षस पो रहेछौ। तर यती कुरा याद राख कि हरेक राक्षसको अन्त्य निश्चित हुन्छ। तिम्रो यो आवारापन र गुण्डागर्दीको परिणाम सुद समेत असुल हुनेछ -- यही जन्ममा, लेखेरै राख।

एउटा कुरा के स्पष्ट हौ तिमी अब भने, यो मेरो तिमीलाई अन्तिम पत्र हुनेछ। अब आइन्दा मलाई संपर्क गर्ने कोशीस तिमीले गर्दा पनि नगर्नु। आजसम्म मेरो जीवनको फैसला तिमीले गर्यौ र मैले त्यस्लाई सहर्स स्विकारेँ पनि। अहँ, नाँइ, हुँदैन जस्ता शब्द मैले कहिल्यै प्रयोग गरेको याद छ तिमीलाई? तर अब तिम्रालागी मैले प्रयोग गर्ने शब्द यिनै हुन्। अँह, म तिमीसँग कुनै ताल्लुकात राख्न चाहन्न। नाँइ, तिम्रो खोक्रो माया मलाई चाहिएन। हुँदैन, अब आइन्दा तिमीले भने बमोजिम हुँदैन। मेरो जिम्मा म आँफैले लिएँ। म आफ्नै खटनमा चल्नेछु। मेरो बा-आमाको जिम्मा मेरो हो। म नेपाल आँउदैछु छिट्टै। तिम्रो नालायकीपन अब धेरै दिन टिक्ने छैनन्। यो लीला कुमारीको सोझोपन खुब भोग्यौ अब मेरो अर्को पाटोको लागि तयार भएर बस्नु। यो मेरो चुनौती भो!

अहिलेलाई यती बुझीराख!

लीला

.....

लीलाको चिट्ठी पढेर म स्तब्ध हुन्छु। उस्ले लेखेका शब्दहरु मेरो मस्तिष्कमा पुगेर द्रिष्य बन्दै जान्थे। त्यो छल, कपट, पिँडा म देख्दै जान्थैँ - द्रिष्यमा।

म निकै गहिरो सौँचमा डुब्छु। मेरो फोनमा आएको मेसेजको 'टिङ्टिङ्' ले म झसङ्ग हुन्छु। एक राष्ट्रिय दैनिकमा कार्यरत पत्रकार भाई संयोगको मेसेज रहेछ। उन्ले धेरै पटक फोन गरिसके कुनै अर्कै केसको बारेमा बुझ्न। मैले उस्को जवाफ दे'की छैन - न फोनमा न मेसेजमा। ‘आज त कुरा गर्नै पर्‍यो’ सोचेर म उस्लाई कल गर्छु। 'हेलो संयोग भाई, म इनिस्पेक्टर राधा धिताल....' म दोषी हाँसो हल्का छोड्दै भन्छु।

पत्रकार भाईसँग कुरा सकेर हवल्दारलाई फोन गरेँ। त्यो रात एक निद्रा नसुती छ्याङ्ग हुन्छ।

.....

*आज...*

करिब पाँच बजे बिहान म थाना पुग्छु। ६ बजे म एरपोर्ट पुग्छु अनी त्यस्को केहीबेरमा टिचिङ् हस्पिटल। हवल्दार मलाई देखेर म भए तिर आउँछन्। पत्रीका मेरो हातमा थमाउदै भन्छन् - 'यो पढ्नुहोला।' उ हलुका हाँस्छ अनी थप्छ - 'म अहिलेलाई बिदा हुन्छु, जय नेपाल।'

'थ्याङ्क्यु, जयनेपाल,' म उस्लाई बिदा दिन्छु। पत्रीकाको एउटा खबरमा गएर मेरा आँखा अडिन्छन् --

*काठमाण्डु संवाद्दाता - काठमाडौ, पुस ७* - हिजो भर्खरै फेरी डिल्लीबजार स्थित चारखाल सडक पेटीमा एउटा शव बरामद भएको छ। सो शवको गोजीबाट बारामद मोटरसाइकलको लाइसेन्समा नाम भुवनराज पुडासैनि भन्ने बुजिएको छ। पछिल्लो समय राजधानीमा बेवारिसे शवहरू भेटिने क्रम बढेको छ। गत १ साता देखि हालसम्म विभिन्न स्थानमा सात वटा बेवारिसे लास फेला परेकाछन्। बिहानको समयमा लासहरू भेटिन थालेको महानगरीय प्रहरी परिसर काठमाडौंकि इन्स्पेक्टर राधा धिताललले जनाएकीछिन्। साँझ जाडोका बेला मादक पदार्थ सेवन गरेर भुइँमा सुत्नेहरू सुतेकै ठाउँमा मृत अवस्थामा फेला पर्ने गरेको प्रहरीले जनाएको छ। फेला पारेको बेवारिसे लास प्रहरीले २५ दिनसम्म महाराजगन्ज स्थित शिक्षण अस्पातलमा राख्ने गरेको छ।

*प्रकाशित मिति: २०६६ पुस ८*

.....

पत्रीका पट्याएर म बाहिर निस्कन्छु। आकाशमा बोइङ् जहाज बेतोडले उक्लिदै हुन्छ - पर, पर, पर पुगेर त्यो बिलाउँछ।

# धङ्धडी

गोकुले - तिहारको माहोल। गाउँघर तिर मादलमा खरी भरिँदै होलान् या खैंजडी बजाउँदै होलान्। 'नारायन, हरी हरी!' दसैं तिहारका ति रङ्गिन क्षणहरु आज श्याम-स्वेतमा सम्झदैँछु। दृष्यहरु झिरझिर गर्दै आए पनि मेरो मनको एन्टिना डाँडातिरै सोझिएको छ। हिजो पकाएका सेलरोटी आज तातो किल्लीबाट बाफिदै निस्केको चियामा चोबेर खान जती मजा आँउछ मलाई ति दिनहरु सँम्झदा मात्रै पनि आज त्यस्तै रमाइलो लाग्दैछ। जिन्दगी आखिर बासी सेलरोटी नै त भो! उभ्रेको सेल।

के केटाकेटी, के तन्नेरी, के बुढाबुढी सबैजना बिहान नछिप्पिदै उठ्थे। कोही ढिकि कुट्न पुग्थे, कोही दैनिक उपक्रम बिसाएर चिया पसलमा गफिदै हुन्थे। हामी केटाकेटी फलामको बन्दुकमा रातो कागजको पत्तीवाला गोली भर्न ब्यस्त हुन्थ्यौँ। मलाई याद छ, बिम्लीका दाईले थुप्रै आलुबम, चक्लेट् बम, डबल बम, झिर्झिरे, फुल्झडी, चक्रबम, बिडीबम आदी आफ्नो पसलमा राखेका हुन्थे। एक्पल्ट म आँफै पनि जोगबनी पुगेको थिएँ। 'होमलाइट्' सलाई देखी दम दिने स्टोभ् सम्म उतै बाट आउँथ्यो। मेरो ध्याउन्न चै पटकामा हुन्थ्यो। कहिले काँही बिम्लीको पसलमा जाँदा उस्का साथीहरु - चम्पा, इन्दु, मेनुका अनी राधिकेसँग एककुनामा बसेर सयपत्री, मख्मली अनी बत्तुका माला गाँस्दै हुन्थी। उस्को पसलमा गाँसेका माला पनि बेचिन्थ्यो। म पुग्नासाथ मलाई माला लगाउन खोज्थी। भन्थी -' ओइ गोकुले, यो माला कत्रो भएछ खै यता आ'त नापुँ।'

म आनाकानी गर्थें। अनी अरु केटीहरु मसिनो खित्का छाड्दै भन्थे - 'गोकुलेलाई त तेरो हातको धुपीको माला मात्र मनपर्छ होला। यो सयपत्री के लाउँथ्यो!'

'चुपलाग चेपारेहरु,' म झर्किन्थेँ।

अब अहिले त ति सबै 'चेपारे' हरुले आ-आफ्नै छेपारेहरु भेटीसके। सबैको बिहे भइसक्यो। छुच्चीहरुले बोलाउँदा पनि बोलाएनन्।

काम र पढ्न भनेर काठमाडौं गएकाहरु भट्टाभटी फर्किदै हुन्थे। नाइट बसहरु सबेरै 'घ्याँच्च-घ्याँच्च' रोक्यो भने थाहा हुन्थ्यो कि पक्कै कोही आयो। आँखा मिच्दै म बाटोतिर हेर्थें। एकदिन देबेन्द्रेको

दाईले फुइँ लायो - 'म त भिडियो कोच् बसमा आ'को।' धेरै पछी म काठमाडौं जाँदा पछी बल्ल थाहा पाएँ यो भिडियो कोच भनेको के हो भनेर। तर म चढेको भिडियो कोचमा भिडियो राख्ने ठाउँमा सिरक कोचेको थियो। हिस्स बुढी हरिया दाँत !

दिदिले एक हप्ता अघी पान दिदैँ भनेकीथी -'ल भाईटिकाको निम्तो तलाईं।' मैले पान चपाएर पिच्च थुक्दै भनेको थिएँ - 'ल ल आइदिउँला।'

'ला यो पैसा,' बा ले हातमा रु. १०० राखिदिनु भयो लक्ष्मी पूजाको बिहानै। 'दिदीलाई भाईटिकामा दिएस्।' मेरो बिहान झिलिमिली भयो। आमाले केही दिन अघी बजारबाट जे भा'का मसला लिएर आउनु भा'थ्यो। हामीले चोरेर खान्छौँ भनेर लुकाएर राख्नुभा'थो ति छोगडा, काजु, किस्मिस आदी। पत्रे, खजुरी, सेल, अर्सा, अनर्सा, ठेकुवा आदी त घरमा जती भए पनि थियो। मैले गोद्रेजमा नयाँ रुमालहरु पनि देखेको थिएँ। मलाई थाहा थियो त्यो मैले पनि पाउनेवाला छु भाईटिकामा। तीनबाट कपुरका बास्ना मगमग आउँथे। तर मलाई टेन्सन् थियो। दिदिले त मलाई रुमाल अनी मिठोमिठो खान दिन्छे, मैले के दिने ? तर जब बाले पैसा दिनुभयो मेरो मन फुरुङ्ग भयो। टेन्सन् साफ।

बिहान गाई पूजा गरियो। गाई तिहारको दिन गाईको टाँङ मुनीबाट छिर्न सक्नेलाई भाग्यमानी मानिन्छ। हामी फुलको थुङ्गा रातो अबिरमा चोबेर गाईको जिउभरी थप्थपाउँथ्यौँ। गौ माता खुशी भएर पुच्छर हल्लाउनु हुन्थ्यो। अनी हामी सजिलै टाँङ् मुनीबाट स्वाट्ट छिथ्यौँ। 'म भाग्यमानी,' म चिच्याउँथे। तर त्यसदिन दिउँसो मलाई लोध्दर लाग्यो। तासमा नराम्रो हारियो। बज्याहरुले पछी दिन्छु भन्दा पनि मानेनन्। 'काँ सोल्टी, लक्ष्मीपुजाको दिन पनि बाँकी ?,' बा ले दिएको १०० रुपयाँ चेट्। हिजोअस्ती पाला, मैनबत्ती आदी किनेर उभ्रेको पैसा मैले आँफैसँग राखेको थिएँ। त्यो पनि स्वाहा.. अब फेरी टेन्सन्। घरमा भन्यो भने भेटिएला चाँदे भनेर चुप बसें। मलाई जसरी हुन्छ पैसा खोज्नु थियो। मनमनै लक्ष्मी मातालाई गुहारैं। अब मसँग एउटै उपाय थियो। देउसी खेल्ने अनी पैसा उठाउने। रघु, गिरीधर, गोबिन्दे र म। चारजानाको एउटा टोली बन्यो। जोड्ले भट्याइयो। रातभर। हामीलाई फुच्चे देखेर होला कोही चारआना, आठआना बार्दलीबाट हुर्याइदिन्थे त कोही जती भट्याए पनि मर्दा उठ्ने हैनन् । गोबिन्दे बिडीबम बालेर हुर्याइ दिन्थ्यो त्यस्ताकामा। दुईदिन, दुई रात पुरै देउसी खेलियो। हातलाग्यो जम्मा २० रुपयाँ भागमा। त्यो पनि रघुले कैलेको तासमा लागेको भनेर लग्यो। 'साले तिहारमा दिन्छु भनेको थिस् हैन?,' थर्कायो। अब भो त ! म पनि के कम। घम्साघम्सी नै पर्यो। साले गोबिन्दे र गिरिधरेले पनि उस्कै साइड लिए। म भागैं।

भाईटिकाको दिन आयो। हामी दिदी दाई र म जम्मा भयौँ। दिदिले एकै पल्टमा सिलौटोले ओखर

फोरी। दुबो तेलमा चोबेर हामी बसेको वरिपरी घेरा हाली। अङ्खराबाट पानी चुहाउँदै वरीपरी परीक्रमा गरी। सप्तरङ्गी टिका निधारमा लगाइदिइ। अनी खाना-खजानाका सेट हातहातमा थमाइदिइ। बा-आमा यो सब निकै मख्ख परेर हेर्दै हुनुन्थ्यो। हामी दाजुभाइले पनि दिदीलाई टिका लाइदियौँ। अब पालो आयो दिदीलाई केही दिने। मैले गोजीबाट बिस्तारै खाम निकालेर खुट्टा ढोगें। त्यस्पछी सबै खान थाल्यौँ। आमाले मामाहरुलाई टिका लगाइदिन थाल्नुभयो। यही मौका छोपेर मैले दिदीलाई सुटुक्क भनेँ - 'कसैलाई नभन है, मैले दे'को खाम भोली पर्सीतिर मात्र खोल्नु।' दिदीले केही नबुझेको तालमा मलाई हेरी अनी टाउको हलाउँदै 'हुन्छ' भनी। मेरो शरीर हलम भो।

…

लढ्दै-पढ्दै आएका हामी, भनेझैँ जिन्दगीको रातो माटो चिप्लो बाटोमा बल्ड्याङ्ग्रिदै बल्ड्याङ्ग्रिदै धेरै पर पुगिएछ। घर भन्दा पर, देश भन्दा परको देश, परदेश। घर-परिवारसँग मनाउन नसकेपनी, मिलेसम्म साथीभाई भेला भएर पकाइन्छ, खाइन्छ, तास खेलिन्छ, दसैं जस्तै दसैं मनाइन्छ, तिहार जस्तै तिहार। खै, अब फेरी त्यो दिन कहिले आउला जब म भट्याउँदै हुनेछु अनी रघु, गिरीधर, गोबिन्दे चिच्याउँदै हुनेछन् - 'देउसिरे!'

हिजो कामबाट फर्केर घरपुग्दा एउटा चिठ्ठी मेरो नाममा आएको देखेँ। खोलेर हेरेँ। त्यही खाम, त्यही कागज, अनी त्यही मेरा अक्षर। लेखियो थियो –

'दिदी मैले सबै पैसा हारेँ तासमा। अब ठुलो भए पछी म पनि काठमाडौं जान्छु अनी फर्केर आउँदा तलाईँ म के के ल्याइदिन्छु है। बा लाई नभन नि फेरी।'

खाम भित्र एउटा रुमाल पनि थियो। कपुर बासना मेरो नाकमा ठोक्किए। त्यो चिठ्ठी पछाडी पनि केही लेखिएको रहेछ -

'भाई, तँ ठुलो भइनस् ?'

# सोसल मिडिया

धेरै पछी,

Log in: pagalpremi4ever

Password: *xxxxxxxxxxx*

...

उन्को तस्बिर देखेँ,

एल्बमको नाम "GOOD TIMESSSSSSS”

पहिलो फोटो - " आहा ! कती राम्री, झन राम्री भा'की मोरी"

दोस्रो फोटो - " दाई होला त्यो साइडको "

तेस्रो- " परिवार जस्तो छ "

चौंथो - " आइँ !! साबित्रे, कमला र गायत्री पनि पो रे'छन् त ! "

पाँचौं - " बिन्दबासिनी मन्दिर !, मन्दिर पछाडि गरेका हर्कतहरु याद आयो, तैट् ! "

छैटौं - " ओहो !! कती धेरै मान्छे "

सातौं - "जग्गे सग्गे पो छ त !, कुन्चैको बिहेमा गईछे ?"

आठौँ - "कस्तो धमिलो, एस्तो फोटो पनि के राखेको ?"

नोवौं - "हँ ?? रातो साडी, रातो चोलो, मेहेन्दी, गहना … ?"

दसौं - " रातो निधार ??? "

...

BAD TIMESSSSSSS

Log out.

www.youtube.com [ENTER]

Search: 'yo samjhine man cha ma birsu kasori' - narayan gopal

# हजुरबालाई लभलेटर

प्रेम प्रशाद मिश्र जि,

तपाईंको पत्र पाएँ। मेरो चिन्ता लिने नि कोही रहेछ - खुशी लाग्यो। बच्चुले सबै पढेर सुनाए। एकफेर पढेर धित मरेन, दोर्याएर पढ्न लाएँ। साह्रै जाती मान्छे रै'छन झर्को नमानी पढेर सुनाए! मैले पनि त्यो दोहोरी कार्जेक्रममा तपाईंले हेरेको ख्याल गरेँकी थिएँ। डर, लाज, अफ्टेरो, के गरुँ र कसो गरुँ भयो खै किन हो। तपाईं रेडियो सुन्न गजुरे आको दिन म घरमै थिएँ। आमालाई अधाह भएकोले पुरेत फुक्न आ'का थे। चमेलीले भनेकी निकै बेर बस्नु भयो रे हैन?

बच्चु गए पछी तपाईंको चिट्ठी ओल्ट्याइ पल्टाइ हेरेँ - छामे, सुम्सुम्याएँ, पट्याएँ, खोलेँ, पट्याएँ। म सोच्छु - के नमिले के नमिले जस्तो देखिने ति धर्साहरु, ति एताउता बटारिएका काला, कुनै चुच्चा, तिखा, कुनै गोला देखिने अक्षर नै मेरो लागि लेखिएको चिट्ठी हो त? आफुले पढ्न नसकेकोमा उकुस-मुकुस भएर भक्कानिएँ। मन त त्याँ लेखिएका एक एक शब्द केलाउन मन थियो, फिँजाउन, निफन्न मन थियो - सके अझै २-४ खेप पढ्न मन थियो नै ....। २-४ अक्षर कसैले चिनाइदेको भा म आँफै पढ्न सक्ने थिएँ झैँ लागेर भक्कानिएँ।

कती सजिलै भन्नुभो है – " हिडँ जुनकिरी भागौं " भनेर। सोच्नोस त भोली गएर अपसज जती जम्मै म मा र मेरो परिवारमा थोपरिन्छ। केटी मान्छेलाई तपाईं केटाहरु जस्तो छुट छ र? हदै भने तपाईंलाई “केटी भगाएछ” भन्लान वरपरकाले। तर म - म त पोइल हिँडेँकी हुन्छु। पोइल हिंड्नु र भगाउनु मा कती धेरै अन्तर हुन्छ, मैले बुझाइरनु त पर्दैन होला। जुनकिरीलाई जस्तो प्रेम प्रशादलाई कसैले पोइल हिँड्यो भन्दैन। अझ कती ले त - 'बाहुन केटो फसाँइ छे' भन्लान्। मेरो परिवार भेट्नेहरुले अनी बिशेषत: आफन्तहरुले बातै पिछे मेरो कुरा निकालेर आलो घाऊमा कती नुनचुक छर्कने होलान्। त्यसै त उनीहरुको के के न खाइदिएझैँ गोल्भेडा जत्रा आँखाले हेर्छन् अझ म हिंडेँ भने त अरु के चाहियो। मलाई यो पनि था'छ - मलाई नानाभाती तथानाम गाली दिने र मेरा बारेमा अनेकन अड्कलबाजी र कानेखुसी, साउती मार्नेहरुको कमी हुने छैन। अरु त परै जाओस भोली तपाईंकै घरका ले पनि मलाई नै नकचरी, नखरमाउली देख्छन्, भन्छन्। " हामी दुईको ज्यान पालिन्छ तिमीले सुर्ता लिनु पर्दैन जुनकिरी " भनेर मधेसको ठुला ठुला सपना त देखाउनु भयो। तर बाँच्नु त बिपनामा पर्छ, हैन र?

कल्पनाको दैलो बाट अलिकती बाहिर निस्कनोस र मेरो ठाउँमा आफुलाई उभ्याएर हेर्नोस अनी महसुस होला मेरो र म जस्ता नारीको पिर-मर्का। मेरी साथी कल्पीको के हालत छ सम्झिदाँ नि आङ्ग सिरिङ्ग भएर आँउछ। त्यस्को अभागी खप्पर पोइल हिँडी। बिचरीलाई सासु-ससुराले फुटेको आँखाले नि देख्न सक्दैनन् रे! जती गरे पनि अपसज आँउछ भन्छे। लोग्नेले पनि वास्ता गर्दैन रे - अझ रक्सी धोकेर आएर बेस्मारी पिट्छ रे! "निस्केर जा" भन्छ रे। अरु लोग्नेमान्छे सँग बोलेको देख्यो मात्र भने नि बिचरीको भातपानी बन्द हुन्छ रे! सुकेर दाउरा भइसकी। त्यती हुँदा पनि यि आइमाइको भाग्य लोग्नेकै दासी भएर बस्नुपर्छ। लोग्नेको आयुको कामना गर्दै तिर्थबर्त भोकभोकै बस्नु पर्छ। पतीको लागि जती भाकल गरे नि, जती बर्त बसेनी पत्निको कर्मको फल केवल पत्नीले भोग गर्छे - हैन र? पतीले त्यस्मा आफ्नो हकदारी गर्न पाँउछ र? पत्निले गरेको धर्मको, उस्ले गरेको उपवासको, सत्सँगको, प्रथानाको फलस्वरुप पती कदापी स्वर्गको हकदारी हुनसक्दैन। पतिलाई मोक्ष मिल्न सक्दैन। मैले तपाईंले पनि त्यसै गर्नुहुन्छ भनेकी हैन - मलाई गलत नसोच्नु होला। मैले त आफुले देखेको भनेकी मात्र हुँ।

अस्ती सन्सरबार बिहानै छेत्री गाँउबाट एकजना लोग्नेमान्छे आ'का थे, मलाई हेर्न। ति सँग अरु २ जना नि थे। बा सँग लामो कुरा गरेर गए। मैले त राम्रो सँग हेर्न पाइन। लामो नाक रे'छ त्यती हो। बा-आमा कुरा गरेको सुनेको - मनग्गे जाएजेथा छ रे! दुई बिस त बाख्रापाठा नै छन् रे। खेतमा बारैमास कुनै न कुनै फलफुल टुट्दैन रे। घर-गृहस्थी सम्हाल्न अली हम्मे हम्मे भा'कोले मेरो कुरा काकाले त्याँ पुर्याएछन् अनी बासँग कुरा गर्न आ'का रे! उमेर चैं अली छिप्पीसकेका पाका भन्ने सुने। स्वास्नी खसेको दुई बर्स नाग्यो रे। छोराछोरी पनि कोही तराइतिर झरे रे कोही कांग्रेसमा लागे रे।

खेती किसानी गरेर बसेका हामी, जे जस्तो छौँ त्यही अवस्थामा ठीक छौँ। भाईबहिनी सानै छन् - घाँसदाउरा, लिपपोत, भातभान्सामा आमा बुढी हुनुभयो मेसो पाउनु हुन्न आँफैले हेर्नु पर्छ। घरको गाई पनी एक हाते छ, म बाहेक अरु कसैले दुहुन सक्दैन। बा एकजना दिनरात साउको खेतमा बुढो हड्डी घोट्नु हुन्छ, खाने मुख धेरै छन्। यो सबलाई चटक्क छोडेर जान मेरो आत्माले मान्दैन। फेरी तराइमा सेतो मच्छडको बिग्बिगी छ रे, गर्मी पनि यो शरीरले धान्न सक्दैन। म तपाईंमा बोझ हुन चाहन्न। त्यसैले यो यात्रामा तपाईंको साथ दिने हैसियतमा छैन - माफ पाउँ। बिन्ती यो जिद छोडि दिनोस्।

उही,

जुनकिरी खड्का

## ABOUT THE AUTHOR

डा. सुरेश समान निरौला समसामयिक बिषयवस्तुहरुलाई सरल र छरितो भाषामा लेख्न रुचाउँछन् । यस् सङ्ग्रहमा उनक केही लेख रचना समेटिएका छन् । यो उनको पहिलो कृति पनि हो ।